# अष्ट चिरञ्जीवी

## विश्वका आठ चिरञ्जीवी मानिसका बाल-जीवनी





विश्वम्भर चञ्चल
















नेपाल बाल-साहित्य समाज

# अष्ट चिरञ्जीवी

विश्वका आठ चिरञ्जीवी मानिसहरूका

बाल-जीवन

लेखक


## विश्वम्भर चञ्चल


चित्रकार

## आलोक चालीसे


प्रकाशक




नेपाल बाल-साहित्य समाज

काठमाडौं

प्रकाशक
नेपाल बाल-साहित्य समाज (नेबासास)
काठमाडौँ
पो.ब.नं. : १४८८

पहिलो संस्करण : वि.सं. २०५५
दोस्रो मुद्रण : वि.सं. २०६२

कम्प्युटर सेटिङ :
नेपा: सेक्रेटरियल सर्भिस
रामशाह पथ, काठमाडौँ
फोन नं. : ४३०७७२

मुद्रक :
संयुक्त प्रेस
चिकँअट, काठमाडौँ

ISBN- 9994684612

# विषय सूची

# कन्फुसिअस



आजभोलि हामी जसलाई कन्फुसिअस भनेर भन्छौं उनको नामको चिनियाँ उच्चारण कुङ फु-जे (Kung Fu-Tze) थियो। तर कुनै-कुनै भाषामा यस नामको उच्चारण कन्फुसिअस हुन गयो। उनी हाल चीन देशमा पर्ने त्यस बेलाको लु (Lu) भन्ने एउटा राज्यमा क्राइष्ट जन्मनु भन्दा साढेपाँचसय वर्षअधि नै जन्मेका थिए। उनकी आमाको नाम चिङ साइ (Ching-Tsai) र बाबुको नाम सु लियाङ हाइ (Shue Liang-Heigh) थियो। उनी गरिब परिवारमा जन्मेका भए तापनि त्यो परिवार अदर्श परिवार थियो।

जब कन्फुसिअस तीन वर्षका थिए उनका

बाबुको मृत्यु भयो र आमाबाट मात्र पालनपोषण हुन थाल्यो । आमा अरूको घर-घरमा गई काम गर्थिन् । कन्फुसिअस पनि आमाको साथ दिन्थे । बेला-बेलामा उनी धार्मिक पर्वहरूमा हाजिर हुन्थे र शिर निहुराएर भगवान्को प्रार्थना गर्थे ।

समय बित्दै गयो । उनी आफ्नो पढाइमा लागेपछि उन्नाइस वर्षको उमेरसम्ममा उनले आफ्ना गुरूहरूले उनलाई सिकाउन सकेजतिका सबै कुरा सजिलैसँग सिके । उनी आफै पनि धेरै बुद्धिमान् थिए । उनी दिनभरी पढ्थे र बेलुकीपख किताबहरू एकातिर राखेर सोचिरहन्थे । मानिसहरूले कसरी आफ्नो जीवनलाई त्यस किसिमसँग बिताउन सक्छन् जसले गर्दा मानव जातिको नमुना देखाउन सकुन् र यो विश्व नै एउटा सुन्दर र परिपक्क होस् । यस्तो उनको चाहना थियो ।

यसै समयतिर कन्फुसिअसले विवाह गरे । धनी हुनुभन्दा कसरी असल जीवन बित्न सक्छ भन्ने कुरामा नै उनी बढी चिन्तित थिए । त्यसैले उनले माथिल्लो दर्जाको जागिर खानुभन्दा वस्तुभाउ र आफ्नो घर यताउताका चिजबिजकै हेरचाह गरेर बस्नामा उत्तम ठहऱ्याए । यसदेखि बाहेक उनी इतिहासका किताबहरू पनि पढिरहन्थे र गुरूहरूबाट अरू नौला-नौला कुरा पनि सिकिरहन्थे । देशमा शासन गर्ने सबभन्दा असल तरिका कुन हो भनेर उनी इतिहासबाट नै जान्न खोज्थे ।

अलि-अलि गर्दै मानिसहरूले कन्फुसिअसका बारेमा सुन्न थाले र उनका विचार र बुद्धिमा प्रभावित भई उनीकहाँ ज्ञानहरू सिक्न आउन थाले । 'मानिसले आफ्नो असल चरित्र कसरी बनाउने' भन्नेबारेमा नै उनी सर्वप्रथम आफ्ना चेलाहरूलाई सिकाउँथे । 'भलादमी र दयावान् हुनु तथा ठूला र मान्यजनलाई आदर सत्कार गर्नु' भन्ने दुई कुरामा उनी जोड दिन्थे । उनको आफ्नो जीवनको उद्देश्य के थियो भने मानिसले एकले अर्कोप्रति आफ्नो जवाफदेहीपनको नैतिक चेतनालाई बढाओस् । त्यसैले एउटा चाखलाग्दो कुरा के छ भने उनी जब आफ्ना चेलाहरूलाई शिक्षा दिन थाल्थे उनी भन्थे 'जब मैले कुनै विषयको एक कुरा, भनौं दृष्टिकोणलाई देखाइदिन्छु तिमीहरू आफैले त्यस्ता अरू तीन कुरालाई पत्ता लगाउनु पर्छ । यदि सक्दैनौ भने म त्यस कुरालाई फेरि कहिल्यै पनि दोहऱ्याउने छैन ।'

कन्फुसिअस आफ्नो ज्ञानमा सिद्ध भए । लु राज्यका राजाले पनि आफ्ना दुई छोरालाई उनीकहाँ सिक्न पठाएपछि त्यहाँका मन्त्रीले राजालाई निकाला गरिदिए । तर कन्फुसिअसलाई यो कुरा असह्य भयो । 'जसले आफूलाई शासन गरेको छ त्यसप्रति आज्ञाकारी र भक्त हुनु पर्छ' भन्ने उनको आफ्नो सिद्धान्तको उल्टो थियो यो कुरा । त्यसैले उनी पनि आफ्ना केही चेलाहरू र राजाका साथमा आसपासको अर्को कुनै राज्यमा गएर बसे ।

अर्को राज्यतिर लाग्दा कन्फुसिअसले बाटामा धेरै दुखदायी कुराहरू देखे र आफूले पनि अनुभव गरे । यसको साथसाथै उनले आफ्नो जीवनमा जान्नु पर्ने धेरै पाठहरू समेत सिक्दै गए । यसै बीच एउटा जङ्गलको पहाडी बाटोको चट्टानमाथि बसेर बिलौना गरिरहेकी एउटी आइमाईसँग उनको भेट भयो । बिलौनाको कारण सोध्दा थाह भयो



कि उसको लोग्ने र ससुरालाई बाघले खाइ दियो।

'किन तिमी यस्तो डरलाग्दो ठाउँमा बसिरहन्छचौ त अन्त कहीं नगएर' कन्फुसिअसले सोधे।

'किनभने यहाँ जनतालाई दु:ख दिने कुनै सरकार छैन' भन्ने त्यस आइमाईको जवाफ सुनेपछि उनले आफ्ना चेलाहरूपट्टि फर्कंदै सुनाए, 'सम्फ ! मानिसको लागि सबभन्दा डर लाग्ने बाघभन्दा पनि जनतालाई दुख दिने सरकार बढी डरलाग्दो हुन्छ।'

केही वर्षपछि उनी फेरि लु राज्यमै फर्के तापनि उनी त्यहाँ आइपर्ने सब दु:खबाट पन्छिनाका लागि छुट्टै बसे। त्यस बेला पनि उनी पढि नै रहन्थे र खासगरेर आफ्नो देशका प्राचीन कविताहरू जम्मा गर्थे। उनका चेलाहरूको सङ्ख्या तीन हजार पुग्यो। लुका सब मानिसहरूले उनलाई ठूला शिक्षक माने जसले सारा मानिसलाई आफू बसेको भूमिप्रतिको कर्तव्य निभाउनाका लागि पाठ सिकाइरहेका थिए। यसै कार्यले गर्दा उनी लु राज्यको एउटा मुख्य सहरको मुख्य मेजिष्ट्रेट बनाइए। चाँडै नै त्यो सहर एउटा रामराज्यजस्तै बन्यो। कुनै मानिस बाँकी रहेन जसले कन्फुसिअसको तारिफ र उनलाई आदर नगरेको होस्। तर नजिकैको सि राज्यको राजाले लु राज्यको उन्नतिमा डाह गरे र एउटा योजना तयार पारी त्यहाँका राजा र मन्त्रीहरू समेतलाई त्यस राज्यबाट

# म्याडम क्युरी



वैज्ञानिक आविष्कारहरूमा रेडियो जस्तो महत्त्वपूर्ण कुरा पत्ता लगाउने एउटी महिला थिइन्। उनको खास नाम हो मार्या स्कोल्डोभास्का र जन्म नोभेम्बर ७ तारिख सन् १८६७ मा पोल्यान्डको राजधानी वार्सामा भएको थियो। उनका बाबु-आमा दुवैजना माध्यामिक विद्यालयमा अध्यापन गर्दथे र एउटा मामुली पोल्यान्डेली कृषकवर्गबाट त्यस अवस्थामा पुगेका थिए। तथापि

मार्याकी आमा एउटी उच्च शिक्षित नारी थिइन् र तिनले वार्साको प्राइभेट स्कुलमा उच्च-मध्यम वर्गीय परिवारका छोराछोरीहरूलाई पढाउने काम गर्थिन् ।

मार्याका तीन दिदी-बहिनी र एउटा भाइ पनि थियो । तिनीहरूका नाम क्रमश : ब्रोन्या, हेला र जोजीवो थिए। मार्यालाई परिवारमा मान्या भनी बोलाइन्थ्यो । जब मान्या चार वर्षकी थिइन् उनकी दिदी ब्रोन्याले उनलाई पढ्न सिकाउँथिन्। जुन बखत ब्रोन्या स्वयं राम्ररी नै पढ्न जान्दैनथिन्। कुनै बखत यस्तो हुन्थ्यो जब बाबु-आमाले ब्रोन्यालाई पढ्नाका लागि आदेश दिन्थे तब उनी पढ्न नजानेका कारणले खालि किताबका पानाहरू पल्टाइमात्र रहन्थिन्। तर मान्याले उनको हातबाट किताब खोसी त्यसलाई सोझै आफूले नै पढ्थिन् । मार्याको यस्तो बुद्धिले गर्दा ब्रोन्यामा लाज र बाबु-आमामा चाहिं आश्चर्य प्रकट गराइदिन्थ्यो । तर उनीहरू स्वयं नै कुशल शिक्षक भएकाले सानै उमेरदेखि नै केटाकेटीलाई मानसिक स्थितिमा बढी बल पारिदिनु हुँदैन भन्ने कुरालाई ध्यानमा राखी उनलाई पुतली र अन्य त्यस्तै केटाकेटीका खेल खेल्नलाई बढी मात्रामा उत्साहित तुल्याइ दिन्थे । उनमा सम्झना शक्ति पनि असाध्यै थियो ।

जब मार्या छ वर्षकी भइन् उनको परिवारमा दु:ख आइपर्‍यो । उनको बाबुलाई जागिरबाट हटाइयो र अर्कोतिर आमालाई क्षयरोगले समात्यो र उनी एघार वर्षकी हुँदा उनकी आमाको देहावसान भयो । यस प्रकार उनको परिवारमा एकपछि अर्को दुखद घटना उत्पन्न भए तापनि ती सबै दिदी-भाइहरूले राम्ररी पढ्दै गए र पुरस्कार समेत जिते । मार्या दिनभरि, बेलुकाभरि नै आफै पढ्थिन् र अरूलाई पनि पढाउँथिन् । उनको मानसिक शक्ति असाधारण थियो। पढ्नुदेखि बाहेक उनी कविताहरू पनि पाठ गर्थिन् । सोह्र वर्ष नपुग्दै उनले हाइस्कुल कोर्स पास गरिन् र त्यसमा उनले तेस्रो गोल्ड मेडल प्राप्त गरिन् । उनका बाबुले उनलाई आफ्नो भविष्यको कामबारे सोच्नाका निम्ति एक वर्षको छुट्टी दिए । त्यस एक वर्षको छुट्टीलाई उनले निकै रमाइलो गरी आफ्ना नातेदार र साथीहरूका बीच बिताइन् ।

स्कोल्डोभस्की परिवारमा अरूलाई शिक्षा दिनु नै आफ्नो प्रमुख आदर्श मानिआएको थियो । यसै कारणले पनि हुन सक्छ मान्याले गभर्नेस बन्ने विचार लिइन्। उनले वार्साका सडक-सडक, गल्ली-गल्लीमा घुमी-घुमी गरिब विद्यार्थीलाई पढाइदिने काम गरिन् । सत्र वर्षको उमेर हुँदा उनले आफूजस्तै अरू निराशावादी बुद्धिजीवी-हरूसँगको सम्बन्ध निकै नै बढाइन् । डार्विन स्पेन्सर र कम्टका चेला बनी पोल्यान्डका ती युवक-युवतीहरू आफ्नो देशमा शिक्षा फैलाउन चाहन्थे। जब कि त्यसबेलामा सरकारी आदेशबिना कुनै पनि स्कुलमा उच्च शिक्षा दिन पाइँदैनथ्यो र यदि कसैले दियो भने त्यो कानुन विरुद्ध हुन जान्थ्यो । नयाँ-नयाँ ज्ञान र शिक्षाको खोजी गर्दै हिँडेका यस समुदायमा मार्या र ब्रोन्या दुवैले पूरा भाग लिए ।

आफ्नो देशका विश्वविद्यालयहरूमा स्वास्नीमान्छेहरूलाई भर्ना नलिइनाका कारणबाट

उनकी दिदी ब्रोन्या औषधीशास्त्र पढ्नाका लागि पेरिस गइन्। मार्याले उनको इच्छामा ठूलो मदत पुऱ्याइन् । आफू चाहिँ एक जना धनी कृषक परिवारमा एउटी दसवर्षकी केटी पढाउने काममा लागिन्। यसै बीचमा धेरै विषयका किताबहरूको अध्ययन गर्ने मौका पनि उनलाई मिल्यो तर अपशोच आफूलाई काम लगाउने मालिकको छोरोसँगको प्रेम सम्बन्धले गर्दा उनले त्यो घर छोड्नु पऱ्यो। त्यसपछि उनी गाउँको त्यस रमाइलो वातावरणलाई छोडी वार्साको एक उद्योगपतिकहाँ काम गर्न थालिन्। तर उनी त्यहाँ पनि धेरै समय बसिनन्। आफ्नो बूढो बाबुको मदतको लागि घर फर्केपछि अगाडिदेखि नै अध्ययन गर्न थालेको रसायनशास्त्र विषयमा व्यवहारिक रूपले काम गर्न थालिन् र यसैबाट केही न केही अनुभव प्राप्त गरिन् । चाहिँदो मात्रामा भने उनीसँग कुनै पनि साधन उपलब्ध थिएन।

छ वर्षसम्मको कठोर परिश्रम र प्रतीक्षा पछि आफ्नी दिदी ब्रोन्याको निमन्त्रणामा सन् १८९१ को शरद ऋतुमा मान्या पेरिस पुगिन् । त्यहाँ पुग्नासाथ उनले पेरिस विश्वविद्यालयको कलेजमा नाम लेखाई पढ्न सुरु गरिन् । कैयौं दिनसम्म खाली पाउरोटी र चियाको भरमा उनले आफूलाई बचाउनु पऱ्यो। उनी बसेको वासस्थान पनि ज्यादै साँगुरो र कुनै पनि सुविधायुक्त थिएन । त्यसैले सार्वजनिक पुस्तकालयहरूमा गएर उनी पढ्ने गर्थिन्। तथापि पेरिस पुगेको दुई वर्षपछि नै उनले भौतिकशास्त्रमा पहिला भएर माष्टर डिग्री प्राप्त गर्नु र त्यसको एक वर्षपछि अर्थात् सन् १८९४ मा गणितमा समेत दोस्रो बनी सोही डिग्री प्राप्त गर्नु कम बुद्धिको मानिसले गर्न सक्ने कुरा थिएन। त्यस बेला उनी २७ वर्षकी मात्र थिइन्।

त्यसै समयतिर पाएर क्युरी नाम गरेका एक जना भौतिकशास्त्रविद्सँग मार्याको पेरिसमै भेट भयो । त्यस बखतसम्ममा पाएर क्युरीले चुम्बकीय तत्त्वमा मूलभूत अन्वेशण गरिसकेका थिए अन्य कुराहरूमा पनि उनको अन्वेषण जारी नै थियो। संसार प्रसिद्ध वैज्ञानिक लर्ड केल्भिनले पनि पाएर क्युरीसँग भेट्ने आशा लिइराखेका थिए । मान्याको साथी, एक जना पोल्यान्डेली भौतिकशास्त्रविद्को चिया पिउने निमन्त्रणामा मान्या र पाएरको आपसी भेट भएपछि मार्याको वैज्ञानिक सोचाइको तीक्ष्णतामा पाएर क्युरी आकर्षित बन्न पुगे । अन्तमा सन् १८९५ को जुलाई महिनामा ती दुवैका बीच विवाह भयो।

विवाहपछि ती दुवै वैज्ञानिकहरू आपसमा मिली आफ्नो काममा लागे,फलस्वरूप आफ्नो काममा सफलता प्राप्त गरी सर्वप्रथम सन् १९०२ मा रेडियम पत्ता लगाए । यसले गर्दा संसारमा वैज्ञानिक युगको एक नयाँ हाँगाको सृष्टि भयो। यस सफलता पछि आन्टोइन हेनरीसहित क्युरी दम्पतीलाई सन् १९०३ को भौतिकशास्त्रपट्टिको नोवेल पुरस्कार प्रदान गरियो । म्याडम क्युरीले नोवेल पुरस्कार मात्र पाएकी होइनन् त्यसै वर्षको सुरुमा नै उनले त्यस विषयमा विद्यावारिधि उपाधि पनि हासिल गरेकी थिइन्।

तर वैज्ञानिक खोजीका कामहरूमा क्युरी दम्पतीलाई आर्थिक अवस्थाले प्रतिकूल असर

पार्दै ल्यायो। पेरिस विश्वविद्यालयको कलेजमा भर्ना भई काम गर्ने सम्बन्धमा धेरैपल्ट असफल भएपछि रोयल इन्स्टिच्युटको निमन्त्रणामा लेक्चर दिन उनीहरू इङ्ल्यान्ड जाँदा दुवैलाई ठूलो इज्जत मिल्यो। पछि पाएर क्युरीले पेरिस विश्वविद्यालयमै काम पाए, उनीहरूको नाम पनि प्रचार हुँदै आए तापनि वैज्ञानिक खोजीका लागि साधनहरूको अभावमा ती दुवै धेरै दुखित बने। त्यसको दुई वर्षपछि नै कुनै दुर्घटनामा परी पाएर क्युरीको मृत्य हुँदा उनी सतचालीस वर्षका थिए।

पाएर क्युरीको मृत्यु पश्चात् सर्वप्रथम फ्रान्सको राष्ट्रिय प्रचलनको विरुद्ध आइमाईलाई पेरिस विश्वविद्यालयमा लेक्चररमा भर्ना गरियो र म्याडम क्युरीले आफ्नो लोग्नेको ठाउँ ओगटिन्। तर पतिको बिछोडको चोट पनि उनमा कम थिएन। यसैले मन बहलाउनाका लागि उनी धेरैजसो आफ्ना छोरीहरूको पढाइका विषयमा ध्यान दिन्थिन्। उनका ती छोरीहरूका नाम इरिन र इभ थिए। पछि गएर तिनीहरूले पनि आ-आफ्ना क्षेत्रमा प्रसिद्धि पाए।

म्याडम क्युरीले सन् १९०८ मा प्रोफेसर-को पदवी पाइन् र आफ्नो अन्वेषणमा पनि अरू बढी खोजी गर्दै रहिन्। संसारका विभिन्न भागबाट आएका विद्यार्थीहरूलाई उनले तालिम पनि दिँदै रहिन्। उनले १९१० मा रेडियो आक्टिभ विषयमा झन्डै एकहजार पेजको किताब प्रकाशमा ल्याइन्। त्यसको अर्को वर्ष रसायन-शास्त्रमा अर्को नोवेल पुरस्कार प्राप्त गरिन्।

यसरी दुईचोटि नोवेल पुरस्कार प्राप्त गर्नेहरूमा आजसम्मको इतिहासमा उनीमात्र एउटी नारी हुन्। म्याडम क्युरीले भौतिक र रसायन दुवै शास्त्रमा पछिका वैज्ञानिकहरूका लागि ठूलो देन दिइसकेकी थिइन्। एउटा गतिलो प्रयोगशाला विनानै त्यत्रो काम गर्ने पाएर क्युरीको मृत्युपछि एउटा संस्थाले 'इन्स्टिच्युट अफ रेडियम' खडा गरिदियो। यो काम सन् १९१२ मा पूरा भयो र यसको निर्देशकका रूपमा म्याडम क्युरीले नै काम गरिन्। प्रथम विश्व युद्धको समयमा समेत उनको वैज्ञानिक अन्वेषणहरूबाट ठूलो मात्रामा मदत मिल्यो। सत्र वर्षीय उनकी जेठी छोरी इरिनले त्यस समयमा नर्स बनेर काम गरिन्। इरिन र उनको लोग्ने फ्रेडेरिकले गर्दै रहेको वैज्ञानिक गतिविधिमा म्याडम क्युरीले ठूलो आशा राखिन् र आफूले जस्तो नोवेल पुरस्कार पाउने छन् भन्ने कुरामा विश्वस्त पनि भएकी थिइन्।

जिन्दगीभरि म्याडम क्युरीले विज्ञानको क्षेत्रमा नै काम गरिन्। प्रथम विश्वयुद्धको समाप्ति पछि उनको आँखा कमजोड हुँदै गयो र रगतको अभावले गर्दा उनको शरीर पनि दिनपर दिन निलो देखिँदै आयो। अनेकन औषधीहरूले पनि उनलाई बचाउन सकेन र सन् १९३४ जुलाई ४ तारिखका दिन यही रगतको अभावको कारणले गर्दा उनको मृत्यु भयो। उनको इच्छा अनुसार अनौपचारिक रूपमै उनलाई उनको लोग्नेको चिहान छेउमा गाडियो।

दुई नोवेल पुरस्कारबाहेक उनले जिन्दगीभरिमा अरू पनि ठूला-ठूला पुरस्कार र उपाधि पाइन् र थुप्रै वैज्ञानिक समाजका सम्माननीय सदस्य भइन्।



# जर्ज वासिङ्टन कार्भर




हामीहरू सबैले रूख, बिरुवा, फूल, बिउ र धेरै साना किराहरू पनि देखेका छौं । यस्ता सबै कुराहरू हामीले हाम्रो घर वरिपरि नै दिनदिनै देख्ने गर्दछौं । तर हामीहरू भन्न सक्दैनौ कुन रूख वा बिरुवा कुन जातको हो, कस्ता फूल फुल्ने फूलहरूका नाम के हुन् र तिनीहरू कुन प्रकारका हुन्, कस्तो किसिमको बिउ केको हो, त्यसले के कुरा फलाउँछ इत्यादि ।

त्यस्तै गरी साना-साना किरा वा फट्याङ्ग्रा पनि धेरैथरीका हुन्छन् । तिनीहरू कस्ता किसिमका हुन् र तिनीहरूले के काम गर्दछन् भन्ने कुरा हामीलाई जान्न धेरै गाह्रो पर्छ । तर जर्ज वासिङटन कार्भर भन्ने एक जना मानिसले यी सबै कुरा राम्ररी जान्दथे । कुनै पनि रूख, बिरुवा, फूल तथा

बिउहरू र प्रत्येकथरीका किरा फट्याङ्ग्राबारे उनलाई सब कुरा कण्ठ नै आउँदथ्यो । यी सबै विषयमा उनले नजान्ने कुनै पनि कुरा थिएन भने पनि हुन्छ ।

जर्ज वासिङ्टन कार्भरले खेतीपातीका सम्बन्धमा धेरै कुरा पढे । खेतीपाती जस्तै रूख बिरुवा इत्यादिमा पनि उनले धेरै काम गरे । यी दुई विषयमा उनले धेरै-धेरै नै खोजीनिती गरी संसारका सबै मानिसलाई यस बारे धेरै कुराहरू सिकाइदिए । खेतीपातीबाट प्राप्त हुने कुनै एक थरी अन्न वा फलफूलबाट नै अरू कति कुरा बनाउन सकिन्छ भन्ने पनि उनले देखाइदिए। यस विषयमा उनले मुखले मात्र बोलेनन् सबका अगाडि काम गरेर नै चित्त बुझाइदिए ।

जर्ज वासिङटन कार्भर हब्सी जातिका अमेरिकी नागरिक थिए। उनी अमेरिकाको मिसाउरी भन्ने ठाउँमा जन्मेका थिए ।

उनकी आमा कसैको बाँधा भएर बसेकी थिइन्। त्यस बखत अमेरिकामा बाँधा राख्ने चलन थियो । ती बाँधाहरू हब्सी जातिका नै मानिस हुन्थे ।

जब जर्ज केटाकेटी थिए उनका बाबुलाई कसैले मारिदियो । त्यसपछि उनी र उनकी आमालाई डाँकाहरूले चोरेर लगे ।

केही दिनपछि जर्जलाई फेला पारियो । श्रीमती कार्भर भन्ने एक जना आइमाईले जर्जलाई आफ्नो घरमा राखिन् उनी धेरै असल र दयालु थिइन् । तर जर्जकी आमालाई डाँकाहरूले कहाँ लगेर के गरे केही थाहा हुन सकेन ।

जर्ज केटाकेटी अवस्थामा दुब्ला र पातला थिए। उनको उमेरका अरू मानिसले गरेका जस्ता काम उनी गर्न सक्दैनथे । त्यसैले उनलाई पाल्ने आइमाईले जर्जलाई सिउने र बुन्ने काम सिकाइन् ।

जब उनको उमेर बढ्दै गयो उनले फूलहरू र रूख-बिरुवा आदिमा बढी चाख दिन थाले । मर्न लागेका रूख-बिरुवाहरूलाई कसरी स्याहार-सुसार गर्ने भन्ने कुरामा उनी सधैं कोसिस गरिहरन्थे । उनको कोसिस अनुसार उनी त्यस काममा सफल पनि हुन्थे ।

रूख-बिरुवा बारे उनले धेरै कुरा जान्दै-आए । आफ्नो घर नजिकैको एउटा जङ्गलमा उनले कसैले थाहा नपाउने गरी एउटा बगैंचा पनि बनाए। मानिसहरूले उनलाई रूख-बिरुवाको डाक्टर भनेर पनि भन्न थाले ।

जङ्गलमा यताउती घुम्दा उनी जे कुरा पाउँथे या देख्थे त्यसबारे उनलाई जान्ने चाख लागिहाल्थ्यो। प्रत्येकथरीको ढुङगादेखि लिएर रूख, बिरुवा तथा फूलहरू समेतको उनलाई नाम जान्ने इच्छा लाग्थ्यो । यस विषयमा उनी श्रीमती कार्भरलाई सोधिरहन्थ्यो । जब उनी जवाफ दिन सक्दिनथिन् जर्ज आफैले त्यसको एउटा न एउटा नाम राखिहाल्थे। कहिले त उनी फूलका गुच्छाहरू अथवा मुठाहरूलाई साथैमा लिएर सुत्ने पनि गर्थे । यसरी उनी प्राकृतिक कुराहरूलाई असाध्यै मन पराउँथे। उनी बालककालदेखि नै प्रकृतिका प्रेमी थिए ।

जर्जलाई चित्रकलाको पनि चाख थियो । उनले एकदिन गाउँको एकजना मानिसको घरमा एउटा चित्र देखेपछि आफूले पनि चित्रहरू बनाउने विचार गरे । तर उनी गरिब भएकाले चित्रहरू बनाउनाका लागि उनीसँग कागज थिएन। त्यसैले उनी ढुङ्गामा, फराकिलो कुनै काठमा वा अरू कुनै वस्तुमा नै चित्रहरू कोरिरहन्थे । चित्रकला कोर्नाका निमित्त रङहरू पनि उनी आफैले

बनाउँथे । उनको यस्तै मिहेनतले गर्दा पछि गएर उनको कलेजका गुरु उनीदेखि धेरै खुसी भए । चित्रहरू बनाउनाका निमित्त गुरुले उनलाई झन बढी हौसला पनि दिए ।

दस वर्षको उमेरमा जर्जले स्कुलमा पढ्न जान सुरु गरे । त्यस बखत उनका कोही पनि साथी-भाइ थिएनन् । उनलाई दया गर्ने कोही पनि थिएन । उनी भोकभोकै रहन्थे । तर पनि उनी पढ्नामा धेरै मिहिनेत गर्दथे । उनलाई पढीगुनीकन ठूलो मान्छे बनेर नाम कमाउने रहर थियो । उनले वासिङटन भन्ने एउटा ठूलो मान्छेको नाम सुनेका थिए । उनलाई पनि त्यस्तै ठूलो मान्छे बन्ने इच्छा भयो । यसैले आफ्नो नाम पनि उनले वासिङटन नै राखे ।

बाबु आमा कोही पनि नभएका टुहुरा जर्जले केही काम गर्न पनि बाँकी राखेनन् । उनले धोबी बनेर लुगा धुने काम गरे । अर्काको कोठा-चोटा सफा गर्ने काम गरे । अरूको भाँडा माझी दाउरा चिरे । उनी यी सबै काम हाँसी-हाँसी गर्दथे । जति उनी मन लगाएर यी काम गर्थे त्यति नै उनी असाध्यै विश्वासिला पनि थिए । जुन-जुन ठाउँमा उनले काम गरे सबैले उनमाथि विश्वास राखे । विश्वासी हुनु जस्तो ठूलो कुरो उनले केही देखेनन् । नमरुन्जेलसम्म उनले यस सिद्धान्तको पालना गरि नै राखे । जर्ज जतिसक्यो बढी काम गर्न चाहन्थे । अनि त्यसै पैसाबाट उनी जतिसक्यो बढी पढ्न चाहन्थे, स्कुलको फि तिर्दथे, खान्थे र आफूलाई परेको काम टार्दथे ।

उनलाई पढ्ने सोख बढ्दै गयो । तेह्र वर्षको उमेरमा उनी फोर्टस्कट भन्ने ठाउँमा गए । तर पैसा नपुग्नाले त्यहाँ उनले पढ्नै पाएनन् । त्यसपछि उनले कुनै मानिससँग केही पैसा सापटी मागी लुगा धुने पसल (लन्ड्री) खोले तैपनि फुर्सदको बेलामा उनी सधैँ पढि मात्र रहन्थे ।

एकचोटि हाइल्यान्ड भन्ने विश्वविद्यालय-को कलेजमा पढ्न उनले स्वीकृति पाए तापनि उनलाई त्यहाँ पढ्न दिइएन, किनभने हब्सी विद्यार्थीलाई त्यहाँ पढाउने चलन थिएन । त्यस बखत अमेरिकामा काला र गोराका बीचमा हुनसम्मको भेदभाव थियो । यसले गर्दा जर्जलाई ठूलो चोट पर्‍यो । त्यसपछि उनले सरकारसँग अलिकति जग्गा मागी खेती गर्ने विचार गरे । तर उनी एक्लो र पैसा पनि नभएकोले उनले खेती गर्न पनि सकेनन् । तब उनले यी सबै काम छोडेर त्यहाँबाट अर्कै ठाउँमा जान खोजे । उनले तरकारी र फलफूल उमारी आफ्नो काम चलाउने विचार गरे । जाँदा-जाँदा जब पैसाले खाँचो पर्थ्यो अनि त्यहीं नै उनी लुगासुगा धुने काम गर्थे । यसरी उनी एक ठाउँबाट अर्को ठाउँमा घुम्दैरहे ।

एक दिन उनी अमेरिकाको मध्यपूर्वी भागमा आइपुगे । त्यहाँ उनलाई कुनै मानिसले काम दिए । उनले जर्जलाई 'तिमीले पढ्न छाड्नु हुँदैन' पनि भने ।

'तर म पढ्न कसरी सक्छु ? न मसँग पैसा छ न त अरू कुनै कुरा नै' जर्जले जवाफ दिए ।

एक दिन जर्ज लुगामा इस्त्री लाउँदै थिए, कसैको आवाजले उनलाई भन्यो, 'जर्ज तिमी स्कुल जाऊ' ।

जर्जले जवाफ दिए, 'म सक्दिनँ' ।

त्यस आवाजले फेरि जर्जलाई भन्यो, 'होइन, तिमी सक्छौ' ।

उनले त्यसपछि इस्त्री भुइँमा राखेर झ्याल-बाट बाहिर हेर्दै ठूलो आवाजमा कराए, 'ठीक

छ ! त्यसो भए अब म फेरि स्कुलमा गएर पढ्न थाल्छु' ।

जर्जले तुरन्त त्यस घरको काम गर्न छाडिदिए र आयोवाको सिम्पसन भन्ने कलेजमा कला विषय लिई पढ्न थाले। तर उनलाई पैसाको आवस्यकता थियो । त्यसैले कहिले उनी कसैको भात पकाइदिने काम गर्दथे, कहिले कुनै ठूलो मानिसको ढोकामा पाले बनेर पढ्नलाई पैसा जम्मा पार्थे । यतिमात्र नभई त्यहाँ उनले लन्ड्री पनि खोले ।

उनको असल बानीव्यहोरा, चलाखी र बुद्धिले गर्दा त्यहाँका सब गुरुहरू उनीदेखि खुसी भए । रूख-बिरुवा र प्रकृति उनलाई मन पर्दो रहेछ भनी ती सबैले थाहा पाए । ती गुरुहरूले उनलाई कृषि कलेजमा गई पढ्ने सल्लाह दिए। त्यसपछि उनी एम्स गई त्यहाँको कृषि कलेजमा पढ्न थाले। तीस वर्षको उमेरमा उनले त्यहाँबाट स्नातक परीक्षा पास गरे ।

त्यस कलेजका प्रोफेसरले पनि जर्जलाई सबभन्दा चलाख लडका भनेर तारिफ गरे। कहिल्यै पनि नसिकाएको कुरालाई एकदम चाँडै सिक्न सक्ने र जुन सुकै कुरालाई पनि ध्यानपूर्वक विचार गर्न सक्ने खुबी उनमा थियो । स्नातक भएपछि त्यही कलेजमा उनले रूख-बिरुवाको विशेषज्ञ बनेर दुई वर्षसम्म काम पनि गरे ।

बत्तीस वर्षको उमेरमा जर्ज अल्वामा गए। त्यहाँ बुकर टि वासिङटन भन्ने आफूजस्तै हब्सीसँग उनको भेट भयो । अल्वामामा हब्सीहरूका लागि भनेर एउटा संस्था खोलिएको पनि थियो । बुकर टि वासिङटनको निमन्त्रणामा उनी त्यहाँ पुगेर उनले त्यहीं नै आफ्नो काम गर्न सुरु गरे ।

ट्युस्केजीमा जर्जले एउटा प्रयोगशाला पनि खोले । त्यहाँ उनले सबैथरीका बिउ, बिरुवा, माटो र त्यसमा लाग्ने कीराहरू जम्मा गरी तिनीहरू बारे जाँचिरहन्थे । कस्ता किसिमका बिउ-बिरुवामा कुन किरा लाग्दछन् र तिनीहरूले बालीनाली कसरी बिगार्छन् भनेर उनले एक-एक गरी जाँचे । कस्तो जग्गामा कस्तो बालिनाली लगाउने, त्यस बालीनालीलाई कसरी सुरक्षा गर्ने र कसरी बढी फलाउने भन्ने सल्लाह पनि उनी खेतीवालहरूलाई बारम्बार दिइ नै रहन्थे । खेतीवालहरू पनि उनीसँग यसबारे सोधपुछ गरिरहन्थे ।

त्यति मात्र होइन जर्जले बदामबाट साबुन, सुप (रस), आइसक्रिम तथा चिनी निकाली दिए। आलुबाट मसी, जुत्तामा लाउने पालिस, साबुन, अचार इत्यादि धेरै-धेरै बेग्ला-बेग्लै चिजबिज उत्पन्न भयो । यी सबै काम जर्जले धैर्यसाथ आफ्नै प्रयोगशालामा प्रयोग गरेर पत्ता लगाए ।

उनका यस्ता अनौठा कामबारे अमेरिकाका सबै मानिसले थाहा पाए। उनलाई ठाउँ-ठाउँबाट निम्ता आउन थाल्यो । उनले गरेका कामहरूका विषयमा सबैले जान्न-सुन्न चाहे । धेरै मानिसले उनलाई रुपैयाँ-पैसाको सहयोग गर्न पनि खोजे । तर उनले कसैसँग पनि यस्तो सहयोग लिन चाहेनन् । खाली उनीहरूलाई धन्यवाद दिएर मात्र पठाए। उनले आफ्नो मिहेनत र बुद्धिले मात्र पैसा कमाउन खोजे। ठाउँ-ठाउँबाट ठूला-ठूला पुरस्कार-हरू पनि पाए । आखिरमा उनले जम्मा गरेका सबै रुपियाँ एउटा कृषि अनुसन्धान संस्थाका लागि दिए । यो अनुसन्धान संस्था उनकै नामबाट ट्युस्केजी भन्ने ठाउँमा खोलिएको थियो। त्यहाँ नै उनले जीवनभरि काम गरे।

# थोमस अल्भा एडिसन




मानिसहरू पहिले-पहिले ग्रामोफोन सुन्न पाउँदैनथे, न त आज भोलिको जस्तो यस्तो झलमल्ल उज्यालोमा नै बस्न पाउँथे। किन भने त्यस बेला-सम्ममा यी दुवै कुराको आविष्कार भएको थिएन। यिनको आविष्कार गर्ने मानिस थोमस अल्भा एडिसन हुन्।

थोमस अल्भा एडिसन अमेरिकाका बासिन्दा थिए। उनका बाबु-आमाको उनी सातौं र कान्छो सन्तान थिए। छोटकरीमा उनलाई 'अल्भा' अथवा 'अल' मात्र भनी बोलाइन्थ्यो।

केटाकेटी अवस्थामा नै उनी गजबका मानिस थिए। उनको व्यवहारदेखि उनका बाबु-आमा लगायत वरपरका मानिस पनि आश्चर्य मान्दथे। जुनसुकै कुराको पनि निकै खोजी नीति गर्ने उनको बानी थियो। कुनै कुरा देख्यो भने 'यो कसरी भयो ?' भनी उनी त्यसलाई ध्यानपूर्वक विचार गरिरहन्थे। आफूले बुझ्न नसके बाबु-आमालाई सोध्ने गर्दथे। त्यस्ता उत्सुकताहरूमध्ये कुखुराले चल्ला कसरी पार्छ, चराहरू के कारणले उड्छन्, भन्ने जस्ता प्रश्न उनको बढी हुन्थ्यो। कुनै-कुनै बेला त उनका बाबु-आमा उनको प्रश्नको जवाफ नै दिन सक्दैनथे। तर पनि उनी त्यो कुरा थाहा

पाउन आफै भए पनि लगातार लागिरहन्थे र कहिले त प्रयोग गरेर नै हेर्दथे ।

एक दिन अल्भाले कुखुराले फुलमाथि बसिराखेर चल्ला काढ्छ भन्ने कुरा थाहा पाए । यो देखेर उनले पनि कुखुराका फुलहरू जम्मा गरेर त्यसमाथि आफू बसे । तर त्यहाँबाट चल्ला काढिन सकेन । यसबाट उनले कुखुराले मात्र फुलबाट आफ्नो चल्लाहरू निकाल्दो रहेछ भन्ने थाह पाए ।

यसरी नै उनले चराहरू पखेटाको आधारमा उड्छन् भन्ने थाहा पाए । बेलुनहरू हावामा उड्नाको कारण यसभित्र ग्यास भरिएकोले हो भन्ने पनि बुझे ।

कुनै कुरालाई देखेर वा सुनेर मात्र जान्ने इच्छा उनमा रहेन, त्यस कुरालाई आफूले गरेर नै जान्ने इच्छा उनमा प्रबल थियो । यसैले नौ वर्षको उमेरमा उनका बाबुले उनलाई पढ्नाका निम्ति एकजना प्रशिद्ध विद्वान्ले लेखेको एउटा रशायन शास्त्रको किताब ल्याइदिंदा अल्भाले त्यस किताबमा लेखिएका सबै कुरालाई ठीक मान्न चाहेनन् । उनले त्यहाँ लेखिएका जति कुरालाई आफ्नो प्रयोगशालामा लगी जाँचे । उनको प्रयोगशालामा धेरै प्रकारका रासायनिक पदार्थहरू राखिएका थिए र यसै रासायनिक पदार्थद्वारा उनले त्यस रसायनशास्त्रको किताबको परीक्षण गरे ।

स्कुलमा पनि अल्भा आफ्ना गुरूहरूसँग लगातार प्रश्नहरू सोधिरहन्थे । यसले गर्दा उनका गुरूहरू उनीदेखि दिक्क भए र सबैले उनलाई कक्षामा बदमास भन्न थाले । यसैले उनले जीवन-भरिमा जम्मा ६ महिना मात्र स्कुलमा पढे । तर घरमा भने धेरै जसो उनकी आमाले उनलाई पढाउने गर्थिन् । कुनै बखत उनकी आमा शिक्षिका थिइन् ।

बाह्र वर्षको उमेरमा अल्भाले पत्रिकाहरू बेच्न सुरू गरे । त्यसै समयतिर एकजना मानिसले उनको कानमा नराम्रो गरी पिटिदियो । यसैले गर्दा उनी बहिरा भए तापनि धैर्यसाथ काम लिन भने छोडेनन् । पछि-पछि मानिसहरू उनलाई सोध्थे, 'तपाईंले यतिका कुराहरूको आविष्कार गर्नुभयो । तर आफ्नू कान सुन्ने मेसिन किन बनाउनुहुन्न ?'

उनी जवाफ दिन्थे, 'जब म कान सुन्दिनँ, मलाई बाहिरी हल्लाखल्लाले केही असर गर्दैन । अनि म आफ्नो काम मन लगाएर र ध्यानपूर्वक गर्न सक्छु ।'

अल्भा आफ्नो काम कति ध्यान दिएर गर्दा रहेछन् भन्ने कुरा यसैबाट थाहा हुन्छ ।

उनी झुटा कुरा पनि गर्दैनथे, किनभने उनी भन्थे, 'जो मानिसले बोल्दा ठूलो स्वरले कराउनु पर्छ त्यसले झुटो कुरो कहिल्यै बोल्दैन ।'

अल्भाले पत्रिका बेच्ने काम गर्दा खुब पढ्थे । दिन-दिनभरि पढ्थे, पुस्तकालयमा गएर । घरमा किताब र पत्र-पत्रिकाहरू उनका साथमा कहिल्यै छुट्दैनथे । यसदेखि बाहेक उनी आफ्नो प्रयोगशाला-मा नै काम गरिरहन्थे । उनी जे काम गर्थे ती सबै काम एकैचोटिमा सफल हुँदैनथे । तर पनि उनी

आफ्नो हिम्मत कहिल्यै हार्दैनथे ।

आफूले गरेको काम सफल नहोला भनेर उनी सधैं डराउँथे । त्यसैले उनी त्यस कामलाई दोहऱ्याई-तेहऱ्याई गर्ने गर्दथे । उनको यस्तो परिश्रमले गर्दा नै उनले संसारमा यत्रो ठूलो नाम कमाए ।

थोमस अल्भा एडिसनले जीवनमा धेरै कुराहरूको आविष्कार गरे । उनले गरेका आविष्कारहरू एक हजारभन्दा पनि बढी छन् । ती मध्ये ग्रामोफोन र बिजुली बत्ती नै मुख्य हुन् ।

बूढो भइसकेर पनि उनले आफ्नो काम छाडेनन् । असी वर्षको उमेरमा समेत रूख बिरूवाहरू बारे खोजिनीति गर्दै उत्तरी अमेरिकामा पाइने एउटा बिरूवाको पत्ता लगाइछाडे । त्यस बिरूवाबाट रबर उत्पत्ति हुन सक्थ्यो । यसका लागि उनले सत्र हजार बीउ-बिरूवाहरूलाई जाँचिसकेर मात्र यो पत्ता लगाएका थिए । यो बिरूवा सडकको छेउछाउमा उम्रने फूलफुल्ने साधारण वनस्पति थियो । यस रूखलाई अङ्ग्रेजीमा गोल्डेन रड भनिन्छ ।

उनी जे काम गर्दा पनि आफ्ना कामदारहरू-सँग ज्यादै मिलनासार थिए । तर पनि ज्यादै नगिचका साथीभाइ उनका कोही थिएनन् । साथीहरूसँग गफ गरेर बसिरहने फुर्सद उनमा थिएन, कारण जुनसुकै बेला पनि उनी काम नै गरिरहेका हुन्थे । तर पनि कहिलेकाहीं त्यस्तै दुई-तीन जना साथीसँग गफ गरेर आनन्द लिने गर्दथे । उनी बहिरा भए तापनि उनलाई सङ्गीतको निकै सोख थियो । उनी ग्रामोफोनैनिर कान लगेर गीत सुन्ने गर्दथे । काम गर्नु सबभन्दा ठूलो आनन्द र काम नै सबभन्दा ठूलो साथी भनेर उनी सम्झन्थे ।

उनी धेरै जसो प्रयोगशालामा नै बस्दथे र एक दिनमा अठार घन्टाभन्दा बढी काम गर्दथे । कहिले त उनी चार घन्टा मात्र सुत्दथे । उनी सधैं भन्थे, 'यदि कोही मानिस बढी सुत्यो भने उसले समय गुमाउँछ । त्यसका साथै त्यस समयभित्र कुनै काम गर्ने अवसर पनि उसले गुमाउनु पर्नेछ ।' कहिलेकाहीं भने उनी आफ्ना स्वास्नी र छोरा-छोरीका साथ कतै जाने, घुम्ने, माछा मार्ने र अरू खेलहरू खेल्ने गर्दथे । कहिलेकाहीं मानिसहरू उनलाई सोध्थे पनि, 'तपाईं किन यत्तिको परिश्रम गरेर दुःख मात्र लिइरहनुहुन्छ ?' उनी भन्थे, 'प्रत्येक दुखमा कुनै न कुनै प्रकारको सुख हुन्छ ।'

उनी जसो भन्थे आखिर त्यसै भयो । उनले धेरै-धेरै पुरस्कारहरू पाए । यसदेखि बाहेक उनले अरू देशहरूबाट पनि धेरै मान पदवीहरू पाए ।

थोमस अल्भा एडिसन चौरासी वर्षका भए । उनको स्वास्थ्य बिग्रँदै गयो । पत्रकारहरू उनको ढोकामा जम्मा हुन थाले । उनीहरू भन्थे, 'बत्ती अझै बल्दैछ !' यसको मतलब थियो अल्भा अझै बाँचेका छन् । तर अचानक एक दिन 'बत्ती निभ्यो' भनेर अखबारहरूले खबर छापे । विश्वकै मानिस-हरू उनको मृत्युमा दुखित बने । चलन अनुसार अल्भालाई चिहानमा गाडियो । उनी गाडिएको दिन उनको सम्मानमा सारा देशभरी एक मिनेटको लागि बिजुलीबत्तीहरू पनि निभाइए ।

# हेलन केलर




आज संसारमा धेरै-धेरै अन्धा र बहिरा लोग्नेमान्छे, स्वास्नीमान्छेहरू छन्। तर तिनीहरूमध्ये हेलेन केलर प्रशिद्ध छिन् । तिनी एउटी अन्धी स्वास्नीमान्छे हुन्। तर पनि आँखाले देख्ने मान्छेले जस्तै लेख्न, पढ्न सक्थिन्। तिनी बहिरी थिइन्। तर पनि कान सुन्ने मान्छेले जस्तै अरूले भनेको कुरालाई बुझ्न सक्थिन् । त्यसदेखि बाहेक उनी लठ्यौरी पनि थिइन्। लठ्यौरी भए पनि उनी ठूला-ठूला सभामा गएर भाषण दिन सक्थिन्।

यस्ती अद्भूत महिलाको जन्म सन् १८८० को जुन महिनामा अमेरिकाको अल्वामा भन्ने राज्यमा भएको थियो। उनका बाबु कप्तान थिए। जन्मँदा उनमा केही पनि रोग थिएन। उनी राम्री नै थिइन्। उनकी आमा भन्थिन् 'एक दिन मेरी छोरी एउटी राम्री युवती बन्नेछिन्।'

तर हेलेनको जिन्दगीमा नराम्रो घटना आइपऱ्यो। दुई वर्षको उमेर नपुग्दै उनी नराम्रो गरी बिरामी परिन्। यसले गर्दा उनी आँखा नदेख्ने र कान नसुन्ने दुवै भइन्। उनी बोल्न नसक्ने लाटी पनि भइन्। हेलेनले अब कुनै कुरो पनि देख्न सक्दैनथिन् । उनले कुनै आवाज सुन्न सक्दैनथिन्। आफूलाई मनलागेको कुनै कुरो बोलेर बाबु-आमालाई भन्न सक्दैनथिन्। उनका बाबु-आमालाई यसभन्दा ठूलो पीर अरू के हुन सक्थ्यो ?

बाहिर देखिने गरी शरीरको रोग मात्र हेलेनलाई लागेन उनको भित्र मनको अवस्था पनि

यो कुरा सबैलाई थाहा छ - अन्धाहरूले आँखा देख्दैनन्। बहिराहरूले कान सुन्दैनन्। तर अन्धो मानिसले पनि पढ्न सक्छ, लेख्न सक्छ। अनि, बहिराले पनि अरूले बोलेको कुरालाई बुझेर त्यही अनुसार काम गर्छ।

यस्ता कुरा सुन्दा हामीलाई आश्चर्य लाग्ला र त्यस्ता मानिसबारे जान्न धेरै-धेरै चाख पनि लाग्ला।

नराम्रो गरी बिग्रयो । मानिसहरू उनका आमा-बालाई धेरैथरीका सल्लाह दिन्थे । कसै-कसैले उनीहरूलाई भन्थे, 'हेलेनलाई कतै कोही पनि नभएको ठाउँमा लगेर राख्नोस् ।' तर 'हेलेनको बुद्धि धेरै छ । तिनी सजिलैसँग कुराहरू सिक्न सक्छिन्' भनेर उनकी आमा अरूलाई भन्थिन् ।

हेलेनका बाबु-आमा उनको विषयमा के गर्ने, कसो गर्ने भनेर सोचिरहन्थे । एक दिन उनीहरूले अन्धाहरूका लागि पढाउने एउटा स्कुलको नाम सुने । 'पर्किन्स' नाम गरेको स्कुलमा यस्ता केटाकेटीहरूलाई पढ्न, लेख्न सिकाइन्थ्यो । त्यो स्कुल वोस्टनमा थियो र त्यसका प्रमुखलाई हेलेनका बाबु-आमाले हेलेनको बारेमा सब कुरा लेखेर पठाए । हेलेनलाई सब कुरा सिकाउन एउटी स्वास्नीमान्छे छानिइन् । उनको नाम आन सुलिभान थियो । उनी बुद्धिमती र भर्खर बाइस वर्षकी मात्र थिइन् । उनी पनि पहिले आन्धी नै थिइन् । 'पर्किन्स' स्कुलमा आएपछि उनको आँखाको अपरेसन गरियो । उनी आँखा देख्न थालिन् ।

अन्धी र बहिरी भईकन पनि हेलेन भर्खर चार-पाँच वर्षकी मात्र थिइन् । तर पनि उनको बुद्धि अरू बालकको भन्दा बढी थियो । कुनै चिजबिजलाई छोएर नै उनी त्यो के हो जान्न सक्थिन् । कुनै कुराको आवाजलाई 'यसैको हो' भनेर चिन्न सक्थिन् । हातले छामेर र बास्ना सुँघेर वस्तु छुट्याउन सक्ने गुण उनमा त्यसै बेलादेखि थियो ।

आन सुलिभान उनकी गुरू भएर उनको घरमा आइन् । हेलेनले आफूतिर आइरहेकी आन सुलिभानलाई राम्ररी नै चिन्न सकिन् । कुनै नचिनेको मानिसको हिँडाइको चाल पनि उनले परैबाट थाहा पाइन् । त्यस बखत उनी आफ्नो घरको ढोकामा उभिरहेकी थिइन् । आन सुलिभान-को हातमा एउटा झोला पनि थियो । आन सुलिभानले हेलेनलाई समात्न आउँदा उनले आन-लाई हातले घचेटिदिइन् । तर उनले आन सुलिभानको हातमा झोला छ भन्ने कुरा चाहिँ पहिले नै थाहा पाइसकेकी थिइन् ।

आन सुलिभानले हेलेनलाई सिकाउन थालिन् । पहिले त उनले हेलेनलाई कुनै वस्तु छोएर त्यसलाई जान्ने ज्ञान दिइन् । यस विषयमा हेलेनको बुद्धि बढ्दै आउन थाल्यो । त्यसपछि हेलेन पढ्ने, लेख्ने कोसिस गर्न थालिन् । तर हेलेन पहिले-पहिले त आफ्नी गुरूसँग सबै कुरामा बाझिमात्र रहन्थिन्, कहिले त उनलाई कुटिदिन्थिन् पनि । आन सुलिभान उनदेखि रिसाउन्नथिन् । बरू झन-झन उनलाई पढ्ने, लेख्ने कुरामा हौसला दिँदै जान्थिन् ।

अलि-अलि गर्दै हेलेनले आफ्नी गुरूले भनेको कुरा मान्न थालिन् । बिहान उठेपछि मुख धुनु, लुगा फेर्नु, ओछ्यान तहलगाउनु यी सब कुराहरू उनी आफै गर्थिन् । खान बस्दा टेबुल कहाँ हुन्छ, कसरी खानु पर्छ भन्ने पनि उनलाई थाहा हुँदै आयो । यी सब कुरा हेलेन आफ्ना औँलाको साहाराबाट थाहा पाउँथिन् । आन सुलिभानले उनलाई हातका औँलाहरूकै साहराबाट ती कुराहरू सिकाउँदै लगिन् । उनी अक्षरहरू हेलेनको हत्केलामा लेखिदिन्थिन् । हेलेनले ती कुराहरू

बुझी त्यही बमोजिम काम गर्ने गर्थिन् ।

अरूले हातको औँलाको उच्चारण गरिदिनु बाहेक हेलेनले आफै किताबको अक्षर पढ्न थालिन् । ती अक्षरहरूलाई उनी हातले छामेर पढ्ने गर्थिन् । यसरी छामेर मात्र जान्ने अक्षरलाई आन सुलिभानले सिकाउँदै लगिन् । अन्धाहरूका लागि तयार पारिएको यस किसिमको अक्षरलाई 'ब्रेल' भनिन्छ ।

आन सुलिभान र हेलेन हातमा हात समातेर धेरै टाढासम्म घुम्ने गर्दथे । सबै किसिमका रूख, बिरूवा र जनावरहरूलाई कसरी छुटयाउने भन्ने पनि उनकी गुरूले उनलाई सम्झाउँदै लगिन् । हेलेन आँखाले त देख्दैनथिन्, तर उनको हृदयभित्र त्यस कुराको तस्बिर जस्तै खिचिन्थ्यो । उनी राम्रै गरी त्यसको अनुभव गर्थिन् । तर कहिलेकाहीँ भने हेलेनले कुनै कुरो बुझ्न सक्दैनथिन् । त्यसपछि उनी गुरूको हत्केलामा नै आफ्नो औँलाले कोरेर सोध्ने गर्थिन् ।

हेलेनलाई पढ्न, सिक्न र लेख्नामा एकदम रामाइलो लागेर आउन थाल्यो । जुनसुकै बेलामा पनि सिकाइदिनोस् भनेर अरूलाई भनि मात्र रहन्थिन् । उनी पहिलेको भन्दा धेरै हँसिली र सुखी पनि देखिन थालिन् । उनलाई नदेखेको र नसुनेको कुरा पनि एकदम राम्रो लाग्न थाल्यो । गुरूसँग उनी प्रश्नहरू सोधिरहन्थिन् । गुरूले उनलाई जवाफ दिइरहन्थिन् । अब उनी गुरूले भनेका कुराहरू सबै बुझ्ने भइसकेकी थिइन् ।

यसदेखि बाहेक हेलेनले कागतमा लेख्न पनि थालिन् । जस-जसले उनलाई मदत गर्थे ती सबैलाई चिठ्ठी लेखेर जवाफ पठाउने गर्थिन् । तीमध्ये डाक्टर अलेकजेन्डर ग्राहम वेल भन्ने मानिसलाई लेखेको चिठ्ठी यस प्रकार छ -

प्रिय श्रीमान् वेल,

तपाईंलाई यो चिठ्ठी लेख्दा म ज्यादै खुसी छु । मेरो बाबुले तपाईंलाई तस्बिर पठाउनु हुनेछ । म, मेरा बाबु र आमा तपाईंलाई भेट्न वासिङ्टन गयौं । मैले तपाईंको घडी समाती-समाती खेलें ।

म तपाईंलाई माया गर्छु । म मेरो किताबमा कथाहरू पढ्न सक्छु । म लेख्न र त्यसलाई पढ्न सक्छु । म गन्न पनि सक्छु । असल लडकी, मेरी बहिनी हिँड्न र दौडन सक्छिन् ।'

झन्डै आठ वर्षको उमेरमा हेलेन वोस्टन गइन् । त्यहाँको पर्किन्स संस्था (स्कुल) मा धेरै अन्धा र बहिरा केटाकेटीहरू थिए । उनीहरूसँग हेलेनले भेट्न चाहिन् । त्यहाँ पुगेको केही दिनपछि नै आन सुलिभानले एक दिन उनलाई सोधिन्, 'हेलेन ! तिमीले यहाँका मानिसलाई कविता भन्न सक्छचौ ।'

म पढ्न सक्छु । हेलेनले नडराईकन जवाफ दिइन् । अन्धा केटाकेटीहरूदेखिबाहेक त्यहाँ अरू धेरै मानिसहरू थिए । ती सबका अगाडि अग्लो ठाउँमा हलेन उभिइन् । उनले खोपेर लेखिएका ब्रेल अक्षरको एउटा कविता लिइन् । देब्रे हातका औँलाले छामेर कविता थाहा पाइन् । अनि दाहिने हातका औँलाले ती मानिसहरूको अगाडि त्यसलाई सङ्केत गरेर भनिदिइन् । ती सबै मानिसहरू उनीदेखि धेरै-धेरै खुसी भए । सबैले उनलाई

स्याबासी दिन आए ।

हेलेन आफ्नी गुरूलाई बोल्न लगाउँथिन् । उनले बोलेको बेलामा आफ्नो हातका औंला लगेर उनको ओठ छाम्ने गर्थिन् । कहिले हातलाई घाँटिमा पुऱ्याउँथिन् । ओठ र घाँटी चलेको भरमा उनी अरूले बोलेको कुरा जान्न सक्थिन् । उनलाई आफूले पनि त्यसै गरी बोल्ने रहर लाग्दथ्यो । यस विषयमा उनी गुरूसँग आफ्नो इच्छा प्रकट गर्थिन् ।

'तिमीले यस्तो आशा राख्नु हुँदैन हेलेन', आन सुलिभानले भन्थिन् । तर हेलेन कोसिस गरिरहन्थिन् । यो विचार उनको मनबाट हट्दै हटेन । अलि-अलि गर्दै उनी 'पापा', 'मामा' भन्न थालिन् र पछि हुँदै गएपछि त्यसमा प्रगति पनि हुँदै आयो । कहिलेकाहीँ उनका बाबु-आमा उनीसँग औंलाले कोरेर कुरा गर्न खोज्थे । तर उनी तिनीहरूको हातलाई हटाइदिन्थिन् । कारण उनी मुखले नै बोल्न चाहन्थिन् र भन्थिन्, 'मैले मुखले नै बोल्ने बानी बसाल्नु पर्छ ।' आखिरमा सोह्र वर्षको उमेरमा उनले बोल्न जान्न थालिन् ।

पर्किन्समा रहँदा उनी जहिले पनि पढिरहन्थिन्, लेखिरहन्थिन् । उनीसित एउटा ब्रेल लिपिको टाइपराइटर थियो । त्यसैको अगाडि बसेर उनी पढ्ने कुरा टाइप गरिरहन्थिन् । मानिसहरूले उनलाई यस्तोविधि मिहेनत नगर्न सल्लाह दिन्थे । तर तिनी भन्थिन्, 'म कलेजमा पढ्न जान्छु । म आइमाईहरूको अधिकारको लागि काम गर्छु र म आफ्नो लागि आफैले पैसा कमाउने विचार गर्छु ।'

उनी जे विषय पनि मिहेनत गरेर सिक्न चाहन्थिन् । एक दिन स्कुलमा एक जना गुरूले उनलाई भनिन् 'हेलेन, तिमी असाध्यै विचार भएकी केटी छौ ।'

उनको यस भनाइमा हेलेनले जवाफ दिइन् 'म सब कुरा सिक्न चाहन्छु ।'

चौबीस वर्षको उमेरमा हेलेनले कलेजको पढाइ पनि सिद्ध्याइन् । उनी धेरै राम्रोसँग पास भइन् । यसमा उनले ठूलो नाम पनि राखिन् ।

अङ्ग्रेजीदेखि बाहेक हेलेनले अरू भाषा पनि सिकेकी थिइन् । यताउताका मानिस सबैले उनलाई पैसाको मदत गर्दथे । तर उनले अरूसँग मदत चाहिनन् । बरू, आफ्नू पैसाबाट उनी अरूको मदत गर्न चाहन्थिन् । आफू जस्तै अन्धा र बहिरा मानिसको लागि उनी सधैं दुखी हुन्थिन् । तिनीहरूलाई पनि आफूजस्तै पढ्न-लेख्न सिकाउने कुरामा उनी खुब ध्यान राख्थिन् ।

एकपटक उनले त्यस्तै एक जनाको नाम सुनिन् । उसको नाम 'टमी' थियो । तर ऊसँग पैसा थिएन । जस-जसले हेलेनलाई चन्दाको रूपमा पैसा पठाउँथे ती सबलाई उनले चिठी लेखिन् । उनले तिनीहरूलाई भन्थिन्, 'तपाईंहरूले मलाई दिने चन्दा टमीलाई दिए बेस हुन्थ्यो ।'

उनी यो पनि भन्थिन्, 'टमीसँग एक पैसा पनि छैन । यदि मैले धेरै दाम जम्मा गर्न सकें भने ऊ पर्किन्समा आउनेछ । अनि, त्यहाँ पढ्न-लेख्न सिकेर ऊ सुखी बन्नेछ ।'

जति-जति हेलेन बुढी हुँदैगइन् उति-उति उनको मन तिनै अन्धा र बहिरा मानिसहरूको

सेवा गर्नपट्टि लाग्थ्यो। यस्तै मानिसहरूको मदतको लागि भनेर उनले बीसलाख अमेरिकी डलर एकै ठाउँमा जम्मा गरिदिइन् र अन्धाहरूको लागि भनेर खोलिएको एउटा संस्थामा पनि उनले मिहेनतसाथ काम गरिन्। त्यस बेलासम्म उनी आफैले पैसा कमाउन सक्ने भइसकेकी थिइन्। उनले आफ्ना राम्रा कामबाट धेरै पुरस्कारहरू पनि प्राप्त गरिसकेकी थिइन्।

दोस्रो विश्वयुद्धमा पनि उनले घाइते सिपाही-हरूका लागि ठूलो मदत पुऱ्याइन्। उनी त्यस समयमा धेरै ठाउँमा गई लडाइँले गर्दा अन्धा, बहिरा, लुला, लङ्गडा भएका सिपाहीहरूसँग राम्रो कुराकानी गर्थिन्। त्यस बखत उनकी गुरू आन सुलिभानको भने मृत्यु भइसकेको थियो। तर पोली थोम्पसन भन्ने अर्की एकजना आइमाई उनका साथमा रहन्थिन्।

यी सब कामहरूदेखि बाहेक हेलेनले धेरै राम्रा-राम्रा किताबहरू पनि लेखेकी छिन्। उनले सानै उमेरदेखि नै किताब लेख्न सुरू गरेकी हुन्। तीमध्ये धेरै जसोमा उनको आफ्नो बयान गरिएको छ। उनले आफ्नी गुरू आन सुलिभानका बारेमा पनि एउटा किताब लेखेकी छिन्।

हेलेन ठाउँ-ठाउँमा गएर ठूला-ठूला सभामा भाषण दिन्थिन्। उनका साथमा सधैं आन सुलिभान रहन्थिन्। आन सुलिभानले उनलाई सिकाउँथिन्। पाँच माहाद्वीपका गरी पच्चीस-छब्बीस देशहरूमा उनी घुमिन्। जताततैबाट उनलाई बोलाइन्थ्यो। राजा, महाराजा, प्रधानमन्त्री र ठूला-ठूला लेखक-हरूसँग पनि उनी धेरै विषयमा छलफल गरिरहन्थिन्। सबै मानिस उनको बुद्धि देख्दा असाध्यै आश्चर्य मान्थे।

हेलेन केलरको बोली सुध्रियो। तर मरून्जेल पनि उनले आँखा भने देखिनन्। उनले कहिल्यै पनि कुनै मानिस अथवा वस्तुको आवाजलाई सुनिनन्। तर पनि यस्ता रोगले दुःख पाएका मानिसहरूलाई उनले आँट दिइन्। 'अन्धो र बहिरो भएर पनि साधारण मानिसले भन्दा बढी काम गर्न सकिन्छ' भनी उनले संसारका सब मानिस-हरूलाई देखाइदिइन्। उनीभित्र बुझ्ने-देख्ने शक्ति थियो। यतिसम्म कि कहिलेकाहीं उनी हवाईजाहाजबाट कतै जान्थिन् र त्यस बेला उनी 'हवाई जाहाज यति फिट माथिबाट उडेको छ' भनी भन्न सक्थिन्। कहिले उनी आफ्नो कोठाको ऐनाअगाडि उभिन्थिन् र आफूलाई कस्तो लुगा सुहाउने हो छामेर नै थाहा पाउँथिन्। एकचोटि उनले सिनेमामा सुद्धा नायिका बनेर खेलिन्। त्यो सिनेमा उनको आफ्नै जीवनलाई लिएर बनाइएको थियो।

उनी भन्थिन्, 'मानिस अन्धो र बहिरो हुनाका दुई कारण छन् - एउटा गरीब हुनु, दोस्रो केही पनि थाहा नपाउने हुनु अथवा मूर्ख हुनु।

धेरै बुढी भइसकेर पनि हेलेन केलरले दुःखी मानिसहरूको सेवा गर्न छाडिनन्। त्यसैले अहिलेसम्म हामीले उनलाई सम्झिरहन्छौं। ●

# महात्मा गान्धी




आध्यात्मिक र राजनैतिक माहान् नेता महात्मा गान्धीको पूरा नाम मोहनदास करम चन्द हो। सन् १८६९ को अक्टोवर महिनाको २ तारिखका दिन उनी हिन्दूस्तानको पोर बन्दर भन्ने एउटा सानो सहरमा जन्मेका थिए। उनका बाबु-आमा वैश्य जातिका भए तापनि धनी परिवारका थिए।

जब गान्धी जन्मिए हिन्दू संस्कार र रीतिरिवाज अनुसार उनको पालन पोषण भयो। मासु खानु, चुरोट, तमाखु पिउनु जस्ता कुराहरूबाट उनलाई सानै उमेरदेखि वञ्चित गरियो। उनको परिवारिक जीवनमा उनी खुब मायाका साथ

पालिए। शहनशीलता दया र सत्यता उनले आफ्ना बाबुबाट सिके र पछि गएर उनको व्यक्तित्वमा यी कुराहरूले निकै प्रभाव पारे। आफ्नो घरमा भएका असल-असल किताबहरू पढ्नु, वादविवाद गर्नु र सङ्गीतका साज-बाजहरूसँग खेलिरहनु जस्ता कुराले उनको बौद्धिक जीवनलाई अझ बढी मदत पुऱ्यायो।

तेह्र वर्षको उमेरमा एकजना महाजनकी छोरी कस्तु्.ई भन्ने नाम गरेकी लडकीसँग गान्धीको विवाह भएपछि उन्नाईस वर्षको उमेरमा कानुन पढ्नाका निम्ति उनी बेलायत गए। तीन वर्षसम्म उनले त्यहीँ बसी कानुनको अध्ययन गरिसकेपछि हिन्दूस्तान फर्के। त्यसको दुई वर्षपछि अर्थात् सन् १८९३ मा उनले काम गरेको ल फर्मले काम गर्न उनलाई दक्षिण अफ्रिकामा पठायो। त्यहाँ बसोबास गरेका हिन्दूस्तानी जनताप्रति त्यहाँको सरकारले गरेको अत्याचार (रङ्गभेद) मा उनले त्यहीँ बसेर तिनीहरूको लागि लड्ने निश्चय गरे। कुनै राजनैतिक प्रमाणबिना नै हिन्दूस्तानी जनतालाई दक्षिण अफ्रिकाका हब्सी मानिसलाई सरह व्यवहार गर्ने कुरामा सुधार ल्याउन उनले नेतृत्व लिएपछि १८९४ मा उनले नाटल इन्डियन काङ्ग्रेसको सङ्गठन गरे। सरकारले उनीमाथि अभद्रतापूर्ण व्यवहार गरे तापनि उनको निस्वार्थीपन र इमान्दारीले गर्दा जनताहरूले उनको पक्ष लिए। कुनै पनि हिंसात्मक क्रियाबिना आत्मबल र सत्य-बलको माध्यमद्वारा उनले क्रान्ति ल्याए जसलाई उनले सत्याग्रहको नाम दिए।

यस किसिमको ज्ञान उनले अमेरिकाली लेखक हेनरी डाभिड थ्रो र रुसी लेखक लियो टल्सटायबाट सिकेका थिए। सरकारले अनेक उपायद्वारा उनी र उनका अनुयायीमाथि दमन नीति लिएर दु:ख दिए तापनि उनले आफ्नो कार्य छोडेनन्। सन् १८९७ मा दक्षिण अफ्रिकी सरकारले जातीय विभाजन सम्बन्धी कानुन पास गरेपछि उनी जेल परे तापनि जनताको बलले गर्दा उनलाई छुटकारा दिइयो। जेलबाट छुटेपछि उनले भने चोर-डाँकाहरूका लागि जेल जेल नै हो तर मेरो लागि भने त्यो एउटा दरबार नै थियो। त्यसै समयतिर उनी कुनै पत्रिकाका सम्पादक भए, तर उनले पैसा भने कानुनी पेसाबाट कमाए। तर त्यसरी कमाएको पैसालाई उनले दक्षिण अफ्रिकामा रहेका जनताको मदतको लागि भनेर एउटा 'ट्रस्टफन्ड' राखिदिए। आफूले चाहिँ एकदमै साधारण जीवन बिताउनाका लागि खालि फलफूल, सागपात, र पिठो खाए। आफ्नै देशमा हातले बुनेको कपडा लगाउने र सकेसम्म भुइँमा नै रहने निश्चय गरे। गान्धीको आफ्नै भनाइ अनुसार उनले यसरी जीवन बिताउनाका लागि उनलाई एकजना अङ्ग्रेज ग्रन्थकार जोन रस्किनबाट प्रेरणा मिलेको थियो। उनलाई जीवन दर्शनका कुरा चाहिँ भागवत् गीता र न्यु टेस्टामेन्टजस्ता पुस्तकहरूले बढी सिकायो। उनको के कुरामा विश्वास थियो भने साधारण जीवनयापन गर्नाले र शारीरिक सुख आनन्दबाट आफूलाई हटाउनाले इच्छा शक्ति र उद्देश्य बढ्न गई आपसी भलाइ हुनेछ र ईश्वरप्रतिको दृष्टिको नजिक पुगिनेछ।

गान्धीले पुन: नागरिक सत्याग्रह सुरु गरे र



हडतालहरू भइ नै रहे। १९१३ मा भएको विरोधमा खानीमा काम गर्ने कामदारहरू र रेलमा काम गर्ने गोरा जातिहरूबाट मदत मिलेको थियो । अन्तमा दक्षिण अफ्रिकाको सरकारले हार मान्नु पर्‍यो र फलस्वरूप हिन्दूस्तानी जनताबाट माग गरिएका धेरै जसो कुराहरूलाई उसले पूरा गरिदियो ।

त्यसको एक वर्षपछि हिन्दूस्तान राष्ट्रिय काङ्ग्रेसको तर्फबाट गान्धीलाई स्वदेश फर्केर ब्रिटिस शासनबाट देशलाई मुक्त पार्नाका लागि बोलाओट भयो । उनी हिन्दूस्तान फर्के तापनि गरिबी, अज्ञानता, भ्रष्टाचार र विभिन्न धर्म र जातिका अन्धविश्वासमा परेका जनतालाई एउटा शक्तिशाली ब्रिटिस साम्राज्यबाट मुक्त पार्नु अविश्वसनीय जस्तै कुरो थियो । यसैले उनले हिन्दूस्तानको एक ठाउँबाट अर्को ठाउँमा घुम्दै अनेकन जात-जाति, भााषा-भाषी र पेसामा लागेका मानिसहरूसँग सम्बन्ध राखी आफ्नो न्यायको मागको लागि बल दिए । उनी जहाँ जान्थे अहिंसात्मक क्रियाद्वारा सत्याग्रहको कदम उठाइदिन्थे । ब्रिटिस सरकारले अनेकन कानुन पास गर्‍यो । सत्याग्रहीहरूलाई दमन गर्न बल प्रयोग गर्‍यो र गान्धी स्वयंलाई धेरैपटक जेलमा राख्यो तर ब्रिटिस सरकारको विरोधका आवाजहरू रोकिएनन् ।

एकातिर गान्धीलाई ब्रिटिस सरकारको अन्याय विरुद्ध लड्नु थियो भने अर्कातिर आफ्ना देशका जनताको जीवनस्तर माथि उठाउनु पनि थियो । यसका लागि उनले सर-सफाइमा जोड दिने, खेतीको सुधार गर्ने, अशिक्षालाई हटाउने,

शारीरिक परिश्रमको महत्त्व बुझाउने र आपसमा भातृत्व भावना जगाउने जस्ता कार्य गरी जनतालाई सचेत तुल्याए । त्यस बाहेक अन्धविश्वास र जातीय प्रथा हटाउनालाई पनि उनी आफैले एउटी अछुत केटीलाई घरमा ल्याई पाले ।

१९२५मा उनले हिन्दूस्तान राष्ट्रिय काङ्ग्रेस-बाट छुटिएर राजनीतिमा भाग लिन छाडे तापनि त्यसको एक वर्षपछि उनी अर्के दलमा लागे र पुनः नेतृत्व गर्न थाले । चार वर्षपछि गान्धीको नेतृत्वमा डान्डीको समुन्द्रमा चौबीस दिनसम्मको ठूलो प्रदर्शन भयो। उनी जेलमा परे तापनि प्रदर्शन भइ नै रह्यो। उनको आध्यात्मिक विचारधारा र लगनशीतलताले गर्दा संसारका ठूलाठूला नेताहरूलाई समेत प्रभाव पार्‍यो। त्यसपछि उनलाई बेलायतका राजा र महारानीका साथ सम्मेलन गर्न बोलाइयो । उनी आफ्नै साधारन पहिरनमा वकिङ्घम दरबारमा उपस्थित हुँदा सबैले आश्चर्य चकित भएर उनलाई हेरे ।

सन् १९३१ मा ब्रिटिस सरकारको क्याविनेट-बाट हिन्दूस्तानलाई स्वतन्त्रता प्रदान गर्ने प्रतिज्ञा गरे तापनि त्यसपछिको क्याविनेटले मानेन । यस बखत हिन्दूस्तान राष्ट्रिय काङ्ग्रेस र गान्धी आफैले हिन्दूस्तानको पूर्ण स्वतन्त्रतामाथि माग गरिरहेका थिए। देशमा अशान्ति फैलि नै रह्यो। गान्धी र अरू उनका साथीहरू जेल पर्दैरहे । त्यसबाहेक हिन्दू-मुसलमान र सिखहरूको आपसी मतभेदले गर्दा समेत उनलाई दुखी बनायो। उनको शारीरिक अवस्थामा शिथिलता र कमजोरीले ग्रस्त गर्दै ल्यायो । तर पनि उनी पन्जाव, बङ्गाल र अरू प्रान्तहरूका गाउँ-गाउँमा डुली भातृत्व र शान्तिको पाठ सिकाउँदै रहे । यस बीच हिन्दूस्तान र पाकिस्तानलाई छुट्याएर स्वतन्त्रता प्रदान गर्ने विषयमा गान्धीले विरोध दर्शाए तापनि उनको राजनैतिक बुद्धिमत्ताले यसो हुनु नै ठीक ठहर्‍याएपछि आखिर १५ अगस्त १९४७ मा हिन्दूस्तान ब्रिटिस शासनबाट मुक्त भयो र स्वराज बन्यो ।

उनी पचहत्तर वर्ष नाघिसकेका थिए। उनमा अब मानसिक जोश र जाँगर बाहेक कुनै शक्ति बाँकी थिएन तैपनि उनी शारीरिक काम गर्दै रहन्थे, जस्तो – चर्खा चलाएर धागो कात्नु र त्यसबाट लुगा बुन्नु आदि । कहिलेकाहीं जनसमूहमा पनि बोल्दै रहन्थे तर दैवको विडम्बना नाथुराम भन्ने एकजना हिन्दूस्तानी यस्तो नेतामाथि पनि गोली हानी उनलाई मार्न पछि परेन। यो घटना जनवरी ३० सन् १९४८ को थियो ।

संसारले उनलाई महान् त्यागी नेताका रूपमा माने । सत्यताका लागि निडर उनी सत्यताकै प्रतीक बने । यसैको आधारमा उनले आफ्नो आत्मजीवनीको नाम दिए – 'दि स्टोरी अफ माइ एक्सपेरिमेन्ट विथ त्रुथ' अर्थात् 'सत्यताको लागि मेरा प्रयोगहरूको कथा'। सत्य र ईश्वरलाई उनले बराबरीको संज्ञा दिए। जहाँ अन्याय र दबाब देखे त्यहाँ उनी जीवनभरि लडि नै रहे । तर लड्नाका नाममा उनले शारीरिक बल भने कहिल्यै प्रयोग गरेनन् । बरु नैतिक शक्ति र मानिस मात्रको चेतनालाई आफ्नो हतियार बनाए । ○

# जयपृथ्वीबहादुर सिंह




बझाङका राजा विक्रमबहादुर सिँहका जेठा छोराका रूपमा विक्रम संवत १९३४मा जयपृथ्वी-बहादुर सिँहको जन्म भएको थियो । उनी जब अलिअलि गर्दै ठूला हुँदै गए परिवारका सबैले उनलाई असाध्य माया गर्न थाले । उनी दरबारको कोठा, चोटा, पाङ्गिनीमा रमाउँदै खेल्थे । उनका बुबा पूजा-पाठ कर्ममा लाग्थे । उनी त्यसबेला बुबासँगै पूजाकोठामा बसेर बुबाले गरेका कामहरू हेरिरहन्थे । यो छाप उनलाई जीवनभरि नै परिरह्यो । यसैले उनी दिनहुँ बिहान, दिउँसो र बेलुका तीन पटक ईश्वरको ध्यान गर्थे । आफ्नो देश छोडी विदेश लाग्दा पनि उनले यो काम छोडेनन् । दिनको एक घण्टाजति चाहिँ एकान्तमा बस्ने गर्थे । यसरी एकान्तमा बसेर ध्यान गर्दा

उनले समाज कल्याणको लागि धेरै कुराहरू सोच्ने मौका पाए ।

केटाकेटी अवस्थादेखि नै उनमा धेरै राम्रा गुणहरू थिए। उनी बुबा-मुमालाई असाध्य मान्दथे, ठूलाको कदर गर्थे, सानालाई माया गर्थे, अरूको दुःख देख्न सक्दैनथे। दरबारमा कोही माग्ने आउँदा उनी आफै माग्नेलाई दान दिन जान्थे। दान दिन नपाउँदा उनी त्यसको विरोधमा रुन थाल्थे। यो देखेर उनका बुबा-मुमाहरू पनि असाध्य खुसी थिए। बझाङी जनता पनि उनको व्यवहार देखेर प्रभावित हुन्थे। ती जनाताहरू उनलाई आफ्नो छोराजस्तै गरी माााया गर्थे।

एक चोटिको कुरा हो। त्यस बेलामा जयपृथ्वीबहादुर सिंह आठ वर्षका मात्र थिए। रानीले उनलाई लिई काठमाडौं जाने विचार गरिन्। यो खबर थाहा पाएर बझाङी जनताहरू दुःखित भए। उनीहरूले रानीसा'बसँग बिन्ती गरे। "रानीसा'ब हजुर काठमाडौं सवारी नहोइबक्सियोस्"।

"किन, तिमीहरूले यसो भनेका" रानीसाबले सोधिन्। उनीहरूले भने–"हजुरसँग कुमार जयपृथ्वीबहादुर सिंह पनि सवारी होइबक्सन्छ। तर हामी भने कुमारलाई पठाउन चाहदैनौं"।

रानीले हाँसेर भनिन्, "कुमार फेरि बझाङ आइहाल्छ नि"।

तर जनताले रानीसा'बको कुरा पत्याएनन्। किनभने रानीसाब बझाङ नफर्कने गरेर नै काठमाडौं जान लागेकी थिइन्। विक्रमबहादुर सिंह र उनमा केही खटपट परेको थियो। यो कुरा पनि त्यहाँका मानिसलाई थाह थियो। फेरि कुमार काठमाडौंमा बसी पढ्नेछन् र फर्कने छैनन् भन्ने उनीहरूलाई लाग्यो। त्यो कुरा साँच्चैकै पनि थियो। त्यसताका त्यतातिर कतै कुनै स्कुल थिएनन्। कुमार पाँच वर्षका हुँदा विक्रमबहादुर सिंहले उनलाई घरमै पढाउन सुरु गरेका थिए। तर घरको पढाइले मात्र उनको चित्त बुझेन। उनका बुबा-मुमाको पनि चित्त बुझेन। यसैले पनि उनलाई काठमाडौंमा लैजान खोजिएको थियो। तर जनता भने उनलाई काठमाडौं जान दिन चाहँदैनथे। जनताले उनीबाट धेरै कुराको आशा राखेका थिए। यही कुरा उनीहरूले रानीसा'बलाई सुनाए। त्यसै बेलामा एउटा बूढा मानिस एक कुनामा बसेर रोइरहेका थिए। जयपृथ्वीबहादुर सिंहले ती बूढा मानिस रोएको देखे। उनले गएर सोधे -"किन रोएको बूढा बा तपाईं ?"

ती बूढा मानिसले पहिले जयपृथ्वीबहादुर सिंहको दुवै गाला मायासाथ मुसारे। अनि उनले रुँदै भने –"हजुरको र हाम्रो बिछोड हुन लागेकोमा रोएको कुमार सा'ब"।

जयपृथ्वीबहादुर सिंहले ती बूढा मानिसको आँखाको आँसु पुछिदिँदै भने –"नरुनुहोस् बूढा बा। म तपाईंहरूलाई छोडेर जान लागेको होइन। तपाईंहरूकै सेवाको लागि पढ्न जान लागेको छु। म धेरै पढेर आउँछु र तपाईंहरूकै सेवामा लाग्छु।"

यो कुरा सुनेर ती बूढा मानिस खुसी भए। उनले जयपृथ्वीबहादुर सिंहलाई आशिष् दिए–"जय होस् कुमारसा'ब हजुरको। हजुरको नाम जतातत्तै फैलियोस्। बझाङ राज्यको उन्नति

हुँदै जाओस् ।"

जय पृथ्वीबहादुर सिंह मुमासँगै काठमाडौं आए । उनलाई बभाङ र काठमाडौंमा आकाश जमिनको फरक लाग्यो । काठमाडौंमा बभाङमा भन्दा धेरै कुराको सुविधा थियो । त्यसमाथि आफ्नी मुमा राणा परिवारकी थिइन् । नेपालमा राणाहरूको धाक र मान ज्यादै ठूलो थियो । उनीहरू ठूला-ठूला र राम्रा-राम्रा दरबारमा बस्थे । राम्रा-राम्रा र धेरै मोल पर्ने लुगाहरू लगाउँथे । धेरै मिठा-मिठा कुराहरू खान्थे । घोडा र बग्गीहरूमा चढेर हिँड्थे । तर जनतालाई यी कुनै कुराको पनि सुविधा थिएन । जयपृथ्वीबहादुरले यी सबै कुराहरू देखे । राणाहरूले जनतामाथि गरेको अन्याय र अत्याचार पनि थाहा पाए । उनलाई यी कुनै कुरा पनि चित्त बुझ्दैनथ्यो । तर उनी केही गर्न सक्दैनथे । त्यसबेला उनी केटाकेटी नै थिए । बभाङबाट आएपछि उनी पढ्नामा नै ध्यान दिन थाले । पढाइमा उनी खुब मेहनत गरी पढ्थे । केही वर्ष काठमाडौं बसे त्यसपछि उनी कलकत्ता गए । कलकत्ता विश्वविद्यालयबाटै उनले म्याट्रिक पास गरे ।

त्यसबेलामा भारतमा अङ्ग्रेजहरूले शासन गरिरहेका थिए । तर यो कुरा भारतका जनतालाई चित्त बुझेको थिएन । उनीहरू आफ्नो देशलाई माया गर्थे । अङ्ग्रेजको हातबाट खोसेर आफ्नै देशका मानिसले शासन चलाउन चाहन्थे । यो देखेर आफ्नो राष्ट्र र राष्ट्र-भाषाप्रतिको माया जयपृथ्वीबहादुर सिंहमा बढ्दै गयो । उनले राजनीतिका केही कुराहरू पनि बुझे । भारतमा भएको उन्नति पनि देखे । त्यसले उनलाई झन प्रभावित पाऱ्यो । म्याट्रिक पास गरेपछि भारतकै प्रयागको एउटा कलेजमा उनले एक वर्षसम्म आइ.ए.को अध्ययन गरे । उनलाई राष्ट्रभाषा, धर्म, रहनसहन, आदि सामाजिक कुराहरूमा बडो रुचि थियो । यसैले उनले यिनै कुराहरूमा राम्रो अध्ययन गरे । भारत बसाइले गर्दा उनलाई अङ्ग्रेजीको पनि राम्रो ज्ञान भयो ।

जयपृथ्वीबहादुर सिंहले १२ वर्षको उमेरमा नै बभाङको राजा पदवी पाएका थिए । त्यसबेलामा श्री ३ महाराज वीरशमशेरले उनलाई बभाङका राजा बनाएका हुन् । कारण उनका बुबा विक्रमबहादुर सिंहसँग राणाहरू रिसाएका थिए । यसैले उनीहरूले उनको राजा पदवी खोसेर जयपृथ्वीबहादुर सिंहलाई राजा बनाए ।

तर त्यस बेलामा जयपृथ्वीबहादुर सिंहको पढाइ अपूरो नै थियो । उनी फेरि काठमाडौं आएर त्यहाँबाट कलकत्ता गए । विक्रम सम्बत् १९५५ मा मात्र उनी बभाङ फर्के । त्यस बेलामा उनी एक्काईस वर्षका थिए । यस उमेरसम्ममा उनले चैनपुर दरबार वरिपरिबाहेक बभाङका अरू ठाउँ देख्न पाएका थिएनन् । अब उनलाई आफ्नो जिम्मेवारी काँधमा आइपरेको थियो । उनी बभाङका अनेक ठाउँहरू घुम्दै हिँड्न लागे । उनी जनतालाई प्रेम गर्थे । उनीहरूको सुख-दुःख बुझ्न चाहन्थे । उनीहरूको आर्थिक र सामाजिक अवस्था जान्न खोज्थे । तर त्यसबेला बभाङको अवस्था आजभन्दा धेरै नराम्रो थियो । जनताहरू ज्यादै गरिब थिए । शिक्षा भनेको के हो कसैलाई

थाहासम्म पनि थिएन । स्वास्थ्य र सरसफाइको किन आवश्यकता पर्छ कसैलाई ज्ञान थिएन । एक ठाउँबाट अर्को ठाउँ पुग्न ज्यादै मुस्किल पर्थ्यो । यी सब अवस्था देखेर जयपृथ्वीबहादुरलाई ज्यादै दु:ख लाग्यो । उनी बझाङका जनताको सेवा गर्ने अठोट गरेर त्यस कार्यमा लागे ।

शिक्षा नै ज्ञानको ज्योति हो । यो कुरा जयपृथ्वीबहादुर सिंहले राम्ररी बुझेका थिए । शिक्षा बिना अरू केहीको पनि विकास हुन सक्दैन भनी उनी भन्थे । तर शिक्षा हासिल गर्न मेहनत गर्नु पर्छ । मेहनतको लागि शारीरिक तन्दुरुस्ती चाहिन्छ । त्यस शारीरिक तन्दुरुस्तीका लागि राम्रो स्वास्थ्यको आवश्यकता पर्छ भन्ने उनको भनाइ थियो । यसैले उनले शिक्षा र स्वास्थ्यमा नै बढी जोड दिए । तर त्यस्तो अवस्थामा एकै चोटिमा सारा बझाङी जनतालाई यी सबै कुरा पुऱ्याउन सम्भव थिएन । यसैले उनले त्यहाँका केही मानिसहरूलाई काठमाडौँमा पढाउन ल्याए उनको एउटा दरबार काठमाडौँमा पनि थियो । उनले आफै पढाउँथे ।

नेपाली जनतालाई नेपाली भाषामा नै शिक्षा दिइनु पर्छ भन्ने उनको जिद्दी थियो । त्यस बेला चलेको अङ्ग्रेजी शिक्षाबाट राष्ट्रियताको विकास हुँदैन भनी उनी भन्थे । संस्कृत शिक्षा पनि उनलाई ठीक लागेन । तर देशमा नेपाली भाषामा लेखिएका पुस्तकहरू थिएनन् । यसको लागि उनी आफैले नेपाली भाषामा पुस्तकहरू लेखे । उनको सबभन्दा पहिलो पुस्तक "अक्षरांक शिक्षा" भन्ने थियो । यसैबाट उनले प्राथमिक तहका विद्यार्थीहरूका लागि ज्ञान दिन खोजे । यो पुस्तक देखेर त्यस बेलाका श्री ३ महाराज देवशमशेर उनीदेखि निकै खुसी भए । जयपृथ्वीबहादुरकै बलले गर्दा श्री ३ देवशमशेरले पनि नेपाली भाषाको प्रचारमा जोड दिए । अनि ठाउँ-ठाउँमा नेपाली भाषाबाट शिक्षा दिने प्राथमिक पाठशालाहरू खुलाए । त्यसबेला उनी नै नेपालका प्रधानमन्त्री थिए ।

जयपृथ्वीबहादुर सिंहले नेपाली भाषामा धेरै उपयोगी पुस्तकहरू लेखे । उनले कलकत्ताबाट हाते प्रेससमेत यहाँ ल्याएका थिए । त्यही प्रेसबाट नेपाली भाषाका पुस्तकहरू छाप्थे । गोरखा-पत्र छापाखानामा काम गर्दा नेपाली साहित्यमा सुधार ल्याए । उनको समयमा गोरखापत्रमा धेरै लेखहरू छापिए । अरू कुराबाट पनि गोरखापत्रको लागि धेरै राम्रा कामहरू गरे । यो गोरखापत्र नै नेपालको सबभन्दा पहिलो समाचार पत्र हो ।

यस प्रकार जयपृथ्वीबहादुर सिंहले राष्ट्र भाषाको ठूलो सेवा गरे । यही राष्ट्र भाषाबाट उनले नेपाली जनतामा राष्ट्रियताको जग पनि बसाले । उनले बझाङबाट ल्याएका मानिसलाई विभिन्न विषयमा ज्ञान दिलाए । ज्ञान प्राप्त गरेपछि ती मानिस फेरि बझाङमा नै फर्के । तीमध्ये कोहीले अड्डा अदालतमा काम गरे । कोही जनताको स्वास्थ्य उपचारपट्टि लागे । कसैले आफ्नो-आफ्नो काम सम्बन्धी सीपहरू सिकाए । यसरी बझाङी जनतामा शिक्षा र सीपको विकास हुँदैगयो ।

केही वर्षपछि जयपृथ्वीवहादुर सिंहले काठमाडौँको आफ्नो दरबारमा खोलेको सत्यवादी

प्राथमिक पाठशालालाई बभाङमा नै सारे। यसको लागि उनले आफ्नै तर्फबाट सबै कुराको प्रबन्ध गरे। बभाङका जनतामा शिक्षाको जागृति आयो। उनले वरपरका अरू जिल्लामा पनि यस्तै पाठशाला र अस्पताल खोल्ने विचार गरेका थिए। तर उनको यो इच्छा पूरा हुन सकेन।

शिक्षासँगै स्वास्थ्यमा पनि उनले जोड दिए। फोहर मैलाको कारणबाट अनेकन रोगहरू लाग्ने कुरा उनलाई थाहा थियो। ती रोगहरूबाट वर्षेनी बभाङी जनताहरू धेरै मर्थे। तर गाउँले जनतामा यसको चेतना थिएन। यिनीहरूलाई यस्तो कुराको ज्ञान दिन उनी सधैं चिन्तित हुन्थे। यस कामको लागि उनले स्कुलको तर्फबाट स्वास्थ्य टोलीहरू खटाए। ती टोलीहरू गाउँ-गाउँमा जान्थे। मानिसहरूलाई स्वास्थ्यको महत्त्व बुझाउँथे। घर आँगन र गाउँको सफाइमा ध्यान दिलाउँथे, फोहोर मैला थुपार्ने बेग्लै खाडल बनाउन लगाउँथे, दिसा-पिसाबको लागि चर्पी बनाउने सुझाव दिन्थे। यी बाहेक उनले स्वास्थ्य सेवा सम्बन्धी अरू व्यवस्था पनि गरे। हाल जयपृथ्वी नगर भनिने ठाउँ र भोजपुरमा औषधालयहरू खोले र डाक्टरको व्यवस्था भारतबाट झिकाएर गरे।

शिक्षा र स्वास्थ्यदेखिबाहेक उनले अरू कुरामा पनि सुधार गरे। गरिब जनतामाथि धनीहरूले अन्याय र अत्याचार गरिराखेका थिए। यस काममा उनले रोक लगाए। जग्गा जमिनको उचित नापी गराए। सिँचाइको व्यवस्था मिलाए। जग्गा कमाउने मोहीहरूको हक दिलाए। जनता माथिको उनको ठूलो दया थियो। काठमाडौंबाट कालीगढहरू झिकाई राम्रा-राम्रा भाँडा-कुँडाहरू बनाउन लगाए। उनीहरूबाट त्यहाँका जनताले पनि यो काम सिक्ने मौका पाए। उनले बाटोघाटोको सुविधाको लागि पनि अनेक प्रयासहरू गरेका थिए।

जयपृथ्वीबहादुर सिंह साँच्चैकै बहादुर थिए। राणा समयको त्यस्तो कडा शासनमा पनि उनी डराएनन्। उनी केवल देश र समाजको भलाइ सोचिरहन्थे, सधैं न्यायको पक्षमा बोल्थे, अन्याय र अत्याचारको विराध गर्थे, जनताको लागि कार्यहरू गर्थे, शिक्षाको विकास र नेपाली भाषाको लागि मरिमेट्थे। शिक्षा र राष्ट्र भाषाको विकास बिना उनी राष्ट्रको उन्नति देख्दैनथे। तर राणाहरू भने देशमा शिक्षा प्रचार गर्न चाहँदैनथे। शिक्षाबाट जनतामा प्रजातन्त्रको भावना जाग्छ भन्ने उनीहरूलाई डर थियो। यसैले जयपृथ्वीबहादुर सिंहलाई यस्तो कार्यबाट रोक्न उनीहरूले अनेक उपायहरू गरे। उनलाई राम्रो जागिर दिए, अनेक कुराबाट लोभ्याउन खोजे। तर उनी लोभिएनन्। श्री ३ महाराज चन्द्रशमशेरले उनलाई आफूसँगै बेलायतको भ्रमणमा पनि लगे। उनी चन्द्र-शमशेरका छोरी ज्वाइँ थिए। बेलायतमा पनि जयपृथ्वीबहादुर सिंहको बुद्धिका कारण बेलायत सरकारबाट उनलाई ठूलो मान भयो। तर उनका ससुरा चन्द्रशमशेर र अरू राणाहरू भने भित्र-भित्रै रिसाए।

जयपृथ्वीबहादुर बेलायतको प्रजातन्त्र र त्यहाँको उन्नति देखेर प्रभावित भएका थिए। यता आफ्नो देशमा भने यस्तो केही थिएन। यसमा

उनलाई धेरै दु:ख लाग्यो। यो दु:ख हटाउन उनले नेपाली जनताको सेवा गरिरहने नै अठोट गरे। तर यस्ता कुरामा आफ्ना ससुरा श्री ३ चन्द्रशमशेरसँग उनको सधैं गडबड भइरह्यो। देवशमशेर जति चन्द्रशमशेर शिक्षा प्रेमी र प्रजातन्त्रवादी थिएनन्। यसैले उनकै जाल झेलबाट थोरै समयमा नै देवशमशेरले प्रधानमन्त्री पद छोड्नु परेको थियो। जयपृथ्वीबहादुर सिंहले पनि आफ्ना ससुराको अन्याय खप्न सकेनन्। अन्तमा उनले आफ्ना बुबा विक्रमबहादुर सिंहलाई बझाङको राजा पदवीको अधिकार सुम्पिदिए। आफू चाहिँ भारततिर लागे र त्यहाँ घर बनाई बसे।

भारत गएर पनि जयपृथ्वीबहादुर सिंहलाई शान्ति मिलेन। उनले नेपाली जनताको हितका लागि कामहरू गरि नै रहे। नेपालमा प्रजातन्त्र ल्याउनाका लागि पनि अनेक उपायहरू गरे। यसै बखत संसारमा पहिलो विश्व युद्ध सुरु भयो। संसारका सबै देशहरूले आफू-आफूमा लडाइँ गरे। धेरै मानिसहरूको मृत्यु भयो। धेरै-धेरै सम्पत्तिको नाश भयो। यस्तो नाशलाई रोक्न लडाइँपछि संसारमा राष्ट्रसङ्घ नामको एउटा संस्था खुल्यो। त्यसमा संसारमा ठूला-ठूला देशहरू सदस्य भए।

राष्ट्र सङ्घले पनि संसारमा शान्ति स्थापना गर्न सकेन। जयपृथ्वीबहादुर सिंह शान्तिका पुजारी थिए। उनी सधैं मानव सेवाका लागि काम गर्थे आफूले राजा पदवी पाए तापनि आफूलाई साधारण जनता सरह नै मान्थे। आफ्नो पदको कहिल्यै धाक-रवाफ राख्दैनथे। विश्वका सबै मानिसलाई दाजुभाइ कै रूपमा देख्थे। धर्म र राष्ट्रका नाउँमा ठूलो-सानोको भेदभाव मन पराउँदैनथे।

तर विश्वयुद्धले यस विचारलाई तोडेको थियो। यसैले उनले भारतमै रहेर पनि एउटा "मानवतावादी सङ्घ" को स्थापना गरे। यस सङ्घको मुख्य उद्देश्य मानव कल्याण र विश्व शान्ति नै थियो। उनी यी कुराहरूको प्रचार गर्दै संसारका धेरै मुलुकहरूमा पुगे। हात हतियारको उत्पादनमा रोक लगाउनाले मात्र संसारमा शान्ति फैलन्छ भन्ने उनको भनाइ थियो। उनका यी भाषणहरूले सबै ठाउँमा उनको मान र मर्यादा भयो। अन्तमा उनी फेरि भारत नै फर्के।

भारत फर्के पछि पनि उनले आफ्नो कार्य रोकेनन्। मानव कल्याण र शान्तिका लागि पुस्तकहरू लेखे। संसारका विद्वान्हरूसँग यस सम्बन्धी विचारको आदान-प्रदान पनि गरिरहे। यता उनका ससुरा श्री ३ महाराज चन्द्रशमशेरले उनलाई बोलाइठाएका पनि थिए। तर उनी नेपाल फर्केनन्। यसै बेला इटालीले अविसिनिया माथि लडाइँ गऱ्यो। यस लडाइँको खबरले जय-पृथ्वीबहादुर सिंह चिन्तित भए। तुरुन्तै उनी त्यहाँ पुगे। उनले लडाइँमा घाइते भएकाहरूको ठूलो सेवा गरे। यस कार्यले उनको स्वास्थ्य बिग्र्यो। उनी भारत फर्के। फेरि दोस्रो विश्व युद्ध सुरु भयो। त्यसताका विक्रम सम्बत् १९९७ सालमा उनको मृत्यु भयो। नेपालका एक महान् व्यक्तिलाई हामीले गुमायौं। तर इतिहासमा उनको नाम कहिल्यै मर्ने छैन।

# फ्लोरेन्स नाइटिङ्गेल



इटालीको उत्तर पश्चिमपट्टि फ्लोरेन्स भन्ने सहर पर्दछ। इटालीका राम्रा सहरहरूमध्ये यो पनि एउटा हो।

फ्लोरेन्स नाइटिङ्गेल त्यहीं जन्मेकी थिइन्। उनका बाबु-आमा बेलायतका बासिन्दा थिए तापनि इटालीलाई धेरै मन पराउँथे। उनीहरू इटालीमा नै बस्दाखेरि फ्लोरेन्स नाइटिङ्गेल जन्मेकी थिइन्। यसैले उनी जहाँ जन्मेकी हुन् त्यही सहरको नामबाट उनको पनि नाम राखियो।

फ्लोरेन्स नाइटिङ्गेलको जन्म सन् १९२० मा भएको थियो। उनकी एउटी दिदी पनि थिइन्। उनको नाम पर्थ थियो। फ्लोरेन्स नाइटिङ्गेललाई छोटकरीमा फ्लो भनी बोलाइन्थ्यो।

फ्लोका बाबु-आमा धनी परिवारका मानिस थिए। त्यसैले फ्लो र पर्थका लागि अनेकन् प्रकारका खेलौनाहरू साधारण कुरो हुन्थ्यो। तर फ्लो चाहिँ बालककालदेखि नै ती खेलौना र पुतलीहरूको खुब स्याहार-सुसार गर्दथिन्। तिनीहरूलाई काखमा लिनु, खेलाउनु जस्ता कार्यहरू नै उनको निम्ति मुख्य थियो। उनी पुतलीहरूलाई शृङ्गार गरिदिन्थिन् र सानो रिक्सा जस्तोमा हालेर तिनीहरूलाई डुलाइमात्र रहन्थिन्।

जब फ्लो अलि ठूली भइन् उनी आफ्ना छरछिमेकका बिरामी मानिसहरूको हेरविचार गर्न थालिन्। मानिस मात्र होइन कुकुरजस्ता जनावरको लागि पनि उनी स्याहारसुसार गर्दथिन्। उनी एउटा सानु घोडामा चढ्थिन् र आमाले तयार पारेका औषधीहरू लिएर बिरामी परेका मानिसहरूकहाँ लगेर बाँड्थिन्।

फ्लो किताबहरू खुब पढ्दथिन्। उनी धेरैजसो समय पढिमात्र रहन्थिन्। उनी बिहान सबेरै उठ्थिन् र आफ्नो पाठ तयार गर्थिन्। उनी

अरूहरू जस्तो धेरै शृङ्गारपटार मात्र गरेर हिंड्न मन् पराउन्नथिन् । उनका बाबुले पनि उनलाई धेरै कुराहरू सिकाउने गर्थे ।

सोह्र वर्षको उमेरमा नै फ्लोले धेरै पढिसकेकी थिइन् । उनले त्यस बखतसम्ममा पाँचओटा विदेशी भाषाहरूसमेत लेख्न-पढ्न सक्थिन् । त्यसदेखि बाहेक उनलाई ती देशको इतिहाससमेत आउँथ्यो । सानै उमेरमा नै उनलाई ज्यादै शिक्षित आइमाईमा गन्न सकिन्थ्यो ।

पढ्नुदेखि बाहेक उनी बेला-बेलामा अनेक थरीका मानिसहरूसँग भेटघाट गर्थिन् । तिनीहरू-सँग बेग्ला-बेग्लै विषयमा वादविवाद र कुराकानी हुन्थ्यो । त्यस बखतसम्ममा उनले युरोपका दुईचार देश पनि घुमिसकेकी थिइन् । उनी यसरी घुम्दा जहाँ-जहाँ जान्थिन् र जो-जो मानिससँग कुरा हुन्थ्यो ती सब कुरा नोटबुकमा लेख्ने गर्थिन् । कहिलेकाहीं उनी यी मानिसहरूसँग हँसी-ठट्टा गरेर आनन्द पनि लिन्थिन् ।

उनी जहिले पनि अरूको सेवा गर्ने काममा विचार गरिरहन्थिन् । त्यसै विषयमा उनी सपना समेत देख्थिन् । यसै बीच एकदिन उनले एउटा साथीबाट सुनिन् कि जर्मनी भन्ने देशको कइसर्स वेर्थ भन्ने ठाउँको एउटा अस्पतालमा आमा-बाबु कोही नहुने बालबच्चाका लागि घर र पढ्ने स्कुलसमेतको व्यवस्था छ । फ्लोले त्यहीँ गएर ती रोगी र घरबार नहुने मानिसहरूको सेवा गर्ने विचार गरिन् तर उनको परिवारले यो कुरा मानेन । यत्रो धनी परिवारकी आइमाई भएर यसरी अरूको नोकरी गर्नु ज्यादै लाज मर्दो कुरा हो भनी उनीहरूले भने । फ्लोले पनि उनीहरूको कुरा मानिनन् । उनले सेविकाको तालिम लिई कइसर्स वेर्थ जाने नै विचार गरिन् । त्यस बखत उनी चौबीस वर्षकी थिइन् ।

फ्लोले थोरै महिना मात्र कइसर्स वेर्थको अस्पतालमा काम गरिन् । त्यसपछि करिब दुई वर्ष उनको त्यसै बित्यो । झन्डै तेँतीस वर्षको उमेरमा उनी फेरि लन्डनको एउटा सेविका गृहमा काम गर्न थालिन् ।

सन् १८५५ को सुरुमा रुसले टर्कीमाथि हमला गऱ्यो । बेलायत र फ्रान्स दुई देश मिलेर टर्कीलाई मदत गरे । त्यो लडाइँ रुसको दक्षिणी भाग र टर्कीको उत्तरी भागमा पर्ने ठाउँमा भएको थियो । त्यस ठाउँलाई क्रिमिया भनिन्छ । अनि त्यो लडाइँ क्रिमियाको लडाइँ भनेर इतिहासमा प्रसिद्ध छ ।

लडाइँले गर्दा धेरै-धेरै सिपाहीहरू घाइते भए । त्यहाँ उनीहरूलाई औषधी आदि गर्ने कुनै राम्रो प्रबन्ध थिएन । यहाँसम्म कि उनीहरूलाई पानी पिलाउने मानिससम्म कोही थिएनन् । घाइते मानिसहरूले नै एउटाले अर्कोलाई मदत गर्दथे ।

यो खबर बेलायतभरि फैल्यो । मानिसहरू यस्तो खबर सुन्दा दुखित भए । तर फ्लोरेन्स जति दु:खी चाहिँ अरू कोही भएनन् । ती रोगी मानिसहरूको सेवा गर्न जाने आँट कसैमा आएन । फ्लोरेन्स यस काममा जान कसिन् र देशभरिका सेवीकाहरूलाई बोलाइन् कोही सेविकाहरू उनीसँग जान तयार भए र तिनीहरूलाई लिएर उनी स्कुटरी भन्ने ठाउँमा पुगिन् । त्यहाँ नै ती घाइते मानिसहरू

राखिएका थिए ।

बेलायतका सब मानिसहरू एकदम खुसी भए। सबैतिरबाट उनको साहस र आँटको तारिफ गरियो । धेरै पत्रिकाहरूमा उनको र उनका साथीहरूको नाम छापिए ।

जब फ्लोरेन्स घाइते सिपाहीहरू राखिएको ठाउँमा पुगिन् त्यहाँका मानिस कसैले पनि उनीहरूलाई मदत गरेनन् । फ्लोका साथीहरू दिक्दार मानेर घर फर्कन आँटे। तर फ्लोले हिम्मत हारिनन्। जसरी भए पनि मैले रोगीहरूको सेवा गर्नै पर्छ भनेर उनी भन्थिन्। धेरै पहिलेको आफ्नो सपना र योजना सफल हुन लागेको देखेर उनी खुसी पनि मानिरहेकी थिइन्।

उनले आफ्नो काम सुरु गरिन्। त्यस बखत धेरै कुराका दु:खहरू उनमाथि आइपऱ्यो तापनि उनले धैर्य गुमाइनन् । रोगीहरूलाई चाहिने आवश्यक कुराहरूसुद्धा उनी कहिल्यै पाउन्नथिन्। त्यस कामका लागि उनी आफै जान्थिन् र बजारबाट किनेर ल्याउँथिन्। यतिसम्म कि उनले आफूले पाउने भत्ताबाट समेत रोगीहरूका निमित्त चिजबिजहरू किन्दथिन् । उनको उदेश्य नै रोगीहरूलाई कसरी सुख दिने भन्ने रहन्थ्यो । त्यसैले रोगीहरू बस्ने ठाउँ र उनीहरूको खानेकुरा तथा सरसफाइमाथि उनी बढ्ता ध्यान दिन्थिन्। कहिले त उनी चौबीस घण्टाको दिनमा बीसघण्टा घाइते मानिसहरूको घाउमा पट्टी बाँधेर नै बिताउँथिन् । कहिले त उनी दिनमा दुई घण्टा मात्र सुत्थिन् । राती उनी एउटा सानो लाल्टेन हातमा लिएर रोगीको ओछ्यान-ओछ्यानमा जान्थिन् । उनीहरूलाई कस्तो छ सब कुरा सोध्थिन् । उनीहरूलाई कुनै दु:ख परे तुरुन्तै त्यसलाई हटाउने कोसिस गर्थिन्। ती सिपाहीहरू उनलाई सबभन्दा असल साथी भनेर भन्दथे । आफ्नो छेवैबाट उनी जाँदा मात्र पनि सिपाहीहरू आफ्नो रोग केही घटेको जस्तो अनुभव गर्दथे । जतिसुकै थाके पनि उनी आफ्नो काम नसिद्धयाई कहिल्यै आराम लिन्नथिन्। तैपनि उनी सधैँ शान्त देखिन्थिन्।

फ्लोरेन्स नाइटिङ्गेलले खाली रोगीहरूको सेवा मात्र गरिनन्। उनले त्यस्ता घाइते सिपाही-हरूको सुधार कार्यका लागि आवश्यक कुराहरूको सुझाव सरकार समक्ष पेस पनि गरिन्। तीमध्ये सफा ठाउँ, सफा खाना, राम्रो हेरविचार जस्ता कुरा नै मुख्य थिए।

स्कुटरीमा उनले ती सिपाहीहरूका लागि एउटा बेग्लै घरको पनि प्रबन्ध गरिदिइन्। त्यस ठाउँमा तिनीहरू आफ्नो फुर्सदको बेलामा पढेर, खेलेर, केही लेखेर अथवा केही कुरा सुनेर नै समय बिताउन सक्थे । उनले ती घाइते सिपाहीहरूको घर परिवारलाई पैसा पठाउने कुरामा समेत उत्साहित तुल्याइन्।

स्कुटरी पुगेको धेरै महिनापछि फ्लोरेन्स आफै पनि धेरै बिरामी भइन्। सबैले उनको सु-स्वास्थको कामना गरे। तर स्कुटरीका सिपाहीहरू भने बढ्ता अधैर्य देखिन्थे । तिनीहरू भित्तातिर मुख फर्काउँथे र उनी त्यसरी बिरामी भएकोमा रुन्थे, बिलौना गर्थे, किनभने फ्लोरेन्समाथि उनीहरूको असाध्यै नै श्रद्धा थियो।

केही समयपछि उनी अलि बिसेक भइन्। डाक्टरहरूले उनलाई बेलायतको आफ्नै घरमा फर्कनलाई सल्लाह दिए। तर तिनले मानिनन्। सन् १८५६ मा लडाइँ पनि बन्द भयो। सब सिपाहीहरू आफ्नो-आफ्नो घर फर्कन लागे तर पनि उनी आफ्नो घर फर्किनन्। जबसम्म स्कुटरीमा घाइते सिपाही बाँकी थिए उनी त्यहीं नै रहिन्।

यसै बीच बेलायतमा फ्लोरेन्सको सम्मानमा एउटा ठूलो सभा भयो। धेरै मानिसहरूले धेरै पैसाको चन्दा उठाए। त्यस चन्दालाई नाइटिङ्गेल कोष (नाइटिङ्गल फन्ड) भनेर नाउँ राखियो। त्यस चन्दाबाट सेविकाहरूका लागि तालिम दिन एउटा स्कुल खोलिने भयो।

त्यसको केही समयपछि फ्लोरेन्स बेलायत फर्कन लागिन्। सब पत्रिकाहरूले उनी आउने खबर छापे। मानिसहरू उनलाई स्वागत गर्न पर्खिरहे। तर उनले यी कुरा मन पराइनन्। त्यसैले कसैले पनि राम्रो थाहा नपाउने गरी उनी आफ्नो घर फर्किन्। मानिसहरूले उनको घरमा मात्र उत्सुकतासाथ उनको स्वागत गर्न पाए।

तैपनि उनी फर्केपछि सो खबर बेलायतभरि फैलिहाल्यो। धेरै-धेरै मानिसहरू उनलाई हेर्न भनी लिहर्स्ट भन्ने ठाउँको वरिपरि पर्खिराखे। उनी त्यस बखत त्यही लिहर्स्ट भन्ने ठाउँमा बस्थिन्।

अनेक प्रकारबाट सबैले फ्लोरेन्सको तारिफ गरे। उनलाई मान गर्नाका लागि धेरै ठाउँमा धेरै मानिसहरूले अनेकन सभाको आयोजना पनि गरे। तर उनले आफ्नो यस्तो तारिफ कहिल्यै चाहिनन्। उनी भन्थिन् 'मैले त्यतिको केही ठूलो काम गर्न सकेको छैन। त्यसैले यस्तो तारिफको कुरा मेरो लागि सुहाउँदैन। बरु हाम्रो देशका सिपाहीहरूको लागि चाहिने राम्रो औषधी-उपचारको प्रबन्ध सरकारले सुधारिदिए पुग्छ।'

उनी बिरामीबाट राम्रो बिसेक भएकी थिइनन्। तैपनि आफ्नोलागि भन्दा ती घाइते सिपाहीहरूका बारेमा मात्र उनी सोचिरहन्थिन्। 'जबसम्म म बाँच्छु तिनीहरूको मद्दतको लागि म सधैँ उनीहरूको साथमा हुन्छु। ती मारिएका सिपाहीको चिहानमा नै पनि उभिन सक्छु' भनी उनी भन्थिन्।

फ्लोका यस प्रकारका कुराहरू सुनेर माहारानी भिक्टोरियाले उनलाई दरबारमा बोलाइन्। त्यस बखत बेलायतमा महारानी भिक्टोरियाले राज्य चलाउँथिन्। फ्लोरेन्सले बेलायती सिपाही फौजको औषधी-उपचारका लागि चाहिने सब कुराको सल्लाह माहारानीलाई दिइन्। यसले गर्दा महारानी भिक्टोरिया र उनका पति साहज्यादा अलवर्ट उनीदेखि ज्यादै खुसी भए। यस प्रकार उनले बेलायती फौजमा ठूलो सुधार ल्याइन् र संसारमा आफ्नो नाम अमर राखिन्। उनलाई अहिले 'लेडी विथ दि ल्याम्प' अर्थात् 'लाल्टेन लिएकी आइमाई' भनेर पनि भनिन्छ। यस देखिबाहेक उनलाई 'लेडी बर्ड' र 'नाइटिङ्गेल' पनि भनिन्छ। यी दुवै राम्रा-राम्रा चराहरूका नाम हुन्। जसरी हामी राम्रा चराहरू देख्दा रमाउछौँ त्यस्तै फ्लोरेन्स नाइटिङ्गेलको नाम सुन्दा पनि रमाउँछौँ।



धपायो ।

उनको समयमा आसपासका राज्यहरू बीच धेरै लडाइँ भइरहन्थे । त्यसलाई रोक्ने प्रयास उनले निकै गरे । त्यसका लागि एक राज्यबाट अर्को राज्यमा उनी घुम्दै हिँडे । उनी कुनै एक राज्यको शासकको सल्लाहकारका रूपमा रहेर आफ्नो योजना अनुसार त्यहाँको शासकलाई शासन चलाउन लगाउन खोज्थे । तर कसैले पनि उनको कुरामा विश्वास गरेन र उनको तेह्र वर्ष यस्तै चालाले बित्यो । उनी घुम्दैरहे, घुम्दैरहे । तर उनका मनपरेका चेलाहरूले भने उनलाई कहिल्यै छोडेनन् र आफ्ना गुरूको दु:खलाई हटाउन उनीहरू हरदम कोसिस गरिरहन्थे पनि । यसै बीच उनले आफ्नो एकजना पुराना मित्रको चिठीमा लु राज्यका राजा मरिसकेका र अहिले उनको छोराले राज्य चलाइरहेकाले उनलाई लु फर्कन अनुरोध गरिएको थियो । उनी फर्के पनि । तर सरकारमा बसेर जनताको सेवा गर्ने कुरा भने उनले मानेनन्, किनभने प्राचीन कविता सङ्ग्रह गर्ने काम उनको अझै अधुरो थियो । त्यसलाई पूरा गर्ने र आफ्ना चेलाहरूलाई ज्ञान दिने मात्र उनको इच्छा रह्यो । त्यस बाहेक उनको उमेरले पनि उनलाई अरू कार्य गर्न दिँदैनथ्यो ।

तीन वर्ष बित्यो । कन्फुसिअस आफ्नै उही पुरानो बाँसको कटेरोमा सुख शान्तिसाथ बसिरहे । तर त्यसपछिका दुई वर्षका बीचमा भएको उनका दुईजना मन परेका चेलाहरूको मृत्युले गर्दा उनी ज्यादै चिन्तित बने र त्यस घटनाले उनी झन-झन बिरामी पर्दैगए । एक दिन बिहान सबेरै उनका अर्का एकजना मनपरेका अन्तिम चेला जे-कुङ (Tze-Kung) ले भुइँमा बसेर आफ्ना गुरुले एउटा पुरानो कविता पाठ गरिरहेको सुने जुन कविताको अर्थ यस प्रकार छ-

एउटा ठूलो पाहाड टुक्रिएर झर्नै पर्छ,<br>
बलियो लट्ठा भाँचिनै पर्छ,<br>
बुद्धिमान् मानिस एउटा बिरुवाजस्तै सुकेर मर्नै पर्छ।

'के भयो गुरु तपाईंलाई ?' भन्ने उनको चेलाको प्रश्नमा उनले भने, 'कुनै पनि बुद्धिमान् शासकले आफ्नो मालिक सम्झेर अब मलाई उठाउन सक्दैन । मेरो अन्तिम दिन आयो ।'

उनका चेलाहरूले उनको जीवन बचाउनाका लागि हर प्रयत्न गरे तापनि त्यसको सातदिनमा नै उनको मृत्यु भयो ।

उनलाई बडो सम्मानपूर्वक चिहानमा गाडियो । उनका चेलाहरूले त्यहीँ नै छाप्रो बनाई-बनाई उनको सम्मानमा तीन वर्ष बिताए, तर उनको सबभन्दा मन परेका तीन चेलाहरू मध्येको जे-कुङले चाहिँ छ वर्ष बिताए ।

कन्फुसिअसको मृत्युको खबर सबैतिर फैल्यो । जिउँदो छँदा उनी तिरस्कारका पात्र बनेका थिए । तर मरेपछि चाहिँ उनका बारेमा र उनले दिएका ज्ञानहरू जान्नलाई सारा मानिस उत्सुक बने । परिणाम स्वरूप पछि गएर पचास वर्षसम्म उनले दिएका शिक्षाहरू पाँच उत्कृष्ट रचना (Five Classics) को नाममा छापिए । त्यसैले आज उनी मरेको यतिका वर्ष बितिसक्दा पनि चीनका मानिसले मात्र होइन संसारकै मानिसले उनलाई सम्मानको दृष्टिले हेरेका छन् । ○

# प्रकाशकको भनाइ

यो किताब आठ जना विश्व प्रसिद्ध मानिसको सङ्क्षिप्त जीवनी हो । यी मानिसहरू आफ्नो जीवनको सुख दुःखको परवाह नगरी आफ्नो लक्ष्यका लागि एकोतार जुटे । यस्ता लगनशील र परोपकारी मानिसहरूको जीवनीको झलक नेपाली बालबालिकालाई दिनु यस किताबको उद्देश्य हो । यस्ता मानिसहरूको जीवनीबाट नेपाली बालबालिकालाई पनि आफ्नो लक्ष्य प्राप्तिको प्रेरणा मिलोस् भन्ने हाम्रो चाहना हो ।

यो किताब पहिलो पल्ट वि.सं. २०५५ मा नेपाल राष्ट्रिय पुस्तकालय विकास परियोजनाअन्तर्गत डानिडा-युनेस्कोको आर्थिक सहयोगमा हामीले छापेका थियौं । बालबालिकाले यस किताबलाई रुचाएका र यो बजारमा धेरै समयदेखि नपाइने भएकोले यसको दोस्रो मुद्रण गरेका छौं ।

नेपाल बालसाहित्य समाज नेपालमा बालसाहित्यसित सम्बन्धित कुनै पनि किसिमको काम गर्ने बालसाहित्यसेवीहरूको संस्था हो यसको स्थापना वि.सं. २०४४ मा भएको थियो । बाल-बालिकाको उमेर सुहाउँदो भाषा र विषयमा विभिन्न विषयवस्तुका बालसाहित्य बढीभन्दा बढी निक्लनु पर्छ र ती देशभरका बालबालिकाको हातहातमा पुग्नु पर्छ भन्ने धारणा राखी यस समाजले नेपाली बालसाहित्यको समृद्धिका लागि काम गरिरहेको छ ।

बाल-बालिकाको बौद्धिक विकासका लागि विद्यालयका कक्षामा पढिने पाठ्यपुस्तक मात्र पर्याप्त हुँदैन, त्यसका लागि बालसाहित्य पनि भरपर्दो माध्यम हो भन्ने सोच यस समाजको छ ।

